नेपालका प्रसिद्ध नारीहरू – १

# कोतपर्वकी महारानी राज्यलक्ष्मी

(जीवनी)



नवीन पब्लिकेशनस्

प्रकाश ए. राज

# कोतपर्वकी महारानी राज्यलक्ष्मी

## (जीवनी)

- प्रकाश ए. राज

*प्रकाशक* : नवीन पब्लिकेशन्स
पो.ब.नं. ५३४५, काठमाडौँ

*संस्करण* : द्वितीय

*साल* : २०६१ वैशाख

*मूल्य* : रु. ७५/-



ISBN : 99933-809-0-3



मुद्रक :
**न्यू नेपाल प्रेस**
प्रधान कार्यालय:
नक्साल, नागपोखरी, पोष्ट बक्स: ८९७५ इ.पि.सी. ५४१४, काठमाडौं, नेपाल
फोन: ४४३४८५०, ४४३४७५३ • फ्याक्स: (९७७-१) ४४३३९२९
व्यापारिक कार्यालय:
शुक्रपथ, न्यूरोड, काठमाडौं, नेपाल
फोन: ४२५९०३२, ४२५९४५० • फ्याक्स: (९७७-१) ४२५८६७८
E-mail: neppress@info.com.np

# विषयसूची

# मन्तव्य

श्रीप्रकाश ए. राजको **कोतपर्वकी महारानी राज्यलक्ष्मी**नामक पुस्तक हाम्रो अगाडि छ। "नेपालका प्रसिद्ध नारीहरू" श्रृङ्खलाअन्तर्गत पुस्तकहरू तयार गर्दै जाने लक्ष्यअनुसार पहिलो सङ्ख्याको रूपमा यो पुस्तक तयार भएको देखिन्छ।

मावली तनहुँमा जन्मेका नरभूपाल शाहलाई गोरखामा ल्याई राजा बनाउने काममा निकै मदत गरेका गौरीश्वर पाँडेका वंशज प्रकाश ए. राजले[1] आफ्नो वंशको इतिहासको प्रामाणिक रूपमा खोजी गर्ने लक्ष्य लिनुभएको कुरा उहाँका **विद्वच्छिरोमणि हेमराज शर्मा**, **विजयराज पण्डित** जस्ता पुस्तकबाट बुझिन्छ। यसको साथै निरन्तर लेखपढमा लागिरहने स्वभावका प्रकाश ए. राजले नेपालको इतिहासका विभिन्न पक्षमा प्रकाश पार्ने पुस्तक प्रकाश गर्दै आएको कुरालाई **पोर्ट्रट्स् यान्ड् फोटोग्राफ्स् फ्रम् नेपाल्**, **ब्रामिन्स् अफ् नेपाल्**, **क्वीन्स् अफ् द शाह डिन्यास्टि इन् नेपाल्**, **सम् टिबेटन् बुड्इस्ट् मन्अस्टरिज् अफ् नेपाल्**, **बहुजातीय बहुभाषीय नेपाल**, **१० वर्क्स् इन् काठ्मान्डु**, **द रइअल् म्यास्अकर् इन् नेपाल्** जस्ता पुस्तकबाट हामी बुझ्न सक्छौँ। यसै प्रसङ्गमा **कोतपर्वकी महारानी राज्यलक्ष्मी**नामक यो पुस्तक तयार भएको देखिन्छ।

अब यस पुस्तकका गुणदोषको बारेमा केही चर्चा गरिन्छ।

---

१. गौरीश्वर पाँडे
।
जगन्निवास
।
नारायण
।
नागेश्वर
।
विजयराज
।
नगेन्द्रराज
।
लोकराज
।
हेमराज
।
केसरिराज
।
प्रकाश ए. राज

[वि.सं. २०२२ मा श्री ५ को सरकार शिक्षामन्त्रालय पुरातत्त्वविभाग नेपाल राष्ट्रिय पुस्तकालयद्वारा प्रकाशित नयनाथ पौडेलको **प्रशस्तिरत्नावलि**को २३ पृ., वि.सं. २०३५ मा काठमाडौँबाट प्रकाश ए. राजद्वारा प्रकाशित उनैको **विद्वच्छिरोमणि हेमराज शर्मा**को ९६ पृ., वि.सं. २०५१ मा काठमाडौँबाट नवीन पब्लिकेशन्सद्वारा प्रकाशित प्रकाश ए. राजको **पोर्ट्रट्स् यान्ड् फोटोग्राफ्स् फ्रम् नेपाल्** (नेपालका, हातले लेखिएका मानिसका तस्वीर र क्यामेराले खिँचिएका तस्वीर) को ७९ पृ., वि.सं. २०५३ मा नवीन पब्लिकेशन्सद्वारा प्रकाशित प्रकाश ए. राजको **विजयराज पण्डित**को ४८ पृ., वि.सं. २०५६ मा काठमाडौँबाट विद्वच्छिरोमणिहेमराजपुरस्कारगुठीद्वारा प्रकाशित मीरा प्रधानको **चन्द्रिका व्याकरणको भाषा वैज्ञानिक अध्ययन**को १३९ पृ., वि.सं. २०५७ मा काठमाडौँबाट श्री ५ को सरकार संस्कृति, पर्यटन तथा नागरिक उड्डयनमन्त्रालय पुरातत्त्वविभागद्वारा प्रकाशित **प्राचीन नेपाल** १४५ सङ्ख्याका ५०-५३ पृष्ठमा छापिएको प्रकाश ए. राजको **नेपालका मूल पुरोहितहरू** भन्ने निबन्ध, त्यस सङ्ख्याको ५२ पृ.]

यस पुस्तकमा यस्तो लेखिएको छ-

राज्यलक्ष्मीको जन्ममितिको बारेमा के अनुमान गर्न सकिन्छ भने राजेन्द्रको जन्ममिति १८७० साल मार्ग हुनाले पतिको उमेरभन्दा पत्नीको उमेर कम हुने चलन भएकोले र ज्यादै सानो उमेरमा विवाह हुने हुनाले पनि पतिपत्नीको उमेरको बीच धेरै फरक पनि हुँदैन थियो । तसर्थ राज्यलक्ष्मीको जन्ममिति १८७० को उत्तरार्ध अथवा १८७१ हुने धेरै सम्भावना देखिन्छ ।

(१ पृ.)

श्री ५ राजेन्द्रको जेठा महारानी साम्राज्यलक्ष्मीको जन्म भारतको हाल उत्तर प्रदेशको गोरखपुरको चिलवा भन्ने ठाउँमा १८७०/७१ सालतिर भएको थियो ।

(४ पृ.)

प्रकाश ए. राजले साम्राज्यलक्ष्मी र राज्यलक्ष्मीको जन्ममिति पत्ता लगाउन गर्नुभएको यो प्रयास मिल्दोजुल्दो छ । यसो भए तापनि साम्राज्यलक्ष्मी र राज्यलक्ष्मीको ठ्याक्कै जन्ममिति पत्ता लाग्छ कि भनी विचार गरौं ।

लक्ष्मीपतिसङ्ग्रहको टिपोटमा यस्तो लेखिएको छ-

संवत् १८७० मार्गशुक्लपूर्णिमायां भौमे रोहिणीभे[२] वृषराशौ राजेन्द्रविक्रमसाहजन्म
संवत् १८७२ भाद्रकृष्णप्रतिपदि रवौ शतभिक्‌भे[३] कुंभराशौ कांछामैयासाहेबजन्म
संवत् १८७२ कार्तिकशुक्लसप्तम्यां बुधे श्रवणनक्षत्रे[४] मकरराशौ ज्येठामहारानीजन्म
संवत् १८७४ भाद्रकृष्णाष्टम्यां बृहस्पतौ मृगशीर्षे[५] वृषराशौ कांछामहारानीजन्म

---

२. वि.सं. १८७० मार्गशुक्ल

| | गते | वार | तिथि | घडी | पला | नक्षत्र | घडी | पला |
|---|---|---|---|---|---|---|---|---|
| मार्ग | २४ | मङ्गल | पूर्णिमा | ४९। | १५ | रोहिणी | ४४। | ५२ |

(पात्रोवाट)

३. वि.सं. १८७२ भाद्रकृष्ण (पूर्णान्तमानले)

| | गते | वार | तिथि | घडी | पला | नक्षत्र | घडी | पला |
|---|---|---|---|---|---|---|---|---|
| भाद्र | ६ | आदित्य | प्रतिपद | ६०। | ० | धनिष्ठा | ७ | ५५ |

(पात्रोवाट)

धनिष्ठा ७ घडी ५५ पलाउप्रान्त शतभिषा नक्षत्र लागेको देखिन्छ ।

४. वि.स. १८७२ कार्तिकशुक्ल

| | गते | वार | तिथि | घडी | पला | नक्षत्र | घडी | पला |
|---|---|---|---|---|---|---|---|---|
| कार्तिक | २५ | वुध | सप्तमी | २५। | ५८ | श्रवण | ५२। | ३७ |

(पात्रोवाट)

५. वि.सं. १८७४ भाद्रकृष्ण (पूर्णान्तमानले)

| | गते | वार | तिथि | घडी | पला | नक्षत्र | घडी | पला |
|---|---|---|---|---|---|---|---|---|
| भाद्र | २२ | वृहस्पति | अष्टमी | १६। | ५६ | रोहिणी | ४। | ३८ |

रोहिणी ४ घडी ३८ पलाउप्रान्त मृगशिरानक्षत्र लागेको देखिन्छ ।

श्री ५ राजेन्द्रसँगै उल्लेख आएका यी जेठा महारानी र कान्छा महारानी श्री ५ राजेन्द्रका महारानी हुन् भन्ने स्पष्ट छ । यताबाट जेठा महारानी साम्राज्यलक्ष्मीको जन्म वि.सं. १८७२ कार्तिक २५ गते र कान्छा महारानी राज्यलक्ष्मीको जन्म वि.सं. १८७४ भाद्र २२ गते भएको देखिन्छ ।

यस पुस्तकको २ पृष्ठमा यस्तो लेखिएको छ-

**श्री ५ राजेन्द्रसँग साम्राज्यलक्ष्मी र राज्यलक्ष्मी दुवैको विवाह १८८० सालको श्रीपञ्चमीको दिन माघ २५ गते भएको थियो । उक्त विवाह काठमाडौं उपत्यकामा रमणीय मानिने ठाउँ बालाजुमा भएको थियो ।**

प्रकाश ए. राजज्यूले लेख्नुभएको यो कुरा प्रामाणिक देखिन्छ ।

श्रीप्रकाश ए. राजले केही वर्षअघि मलाई दिनुभएको तिथ्यावलीबाट[६] श्री ५ राजेन्द्रको दुइटी महारानीका साथ भएको विवाहको विषयमा निकै कुरा थाहा पाइन्छन् । यस कारण त्यससँग सम्बद्ध भाग तल दिँदैछु -

**१८७९ ... मार्गवदि ४ रो २ मा[७] बहादूर भडारी काजी एकदेव वैद्य धोकल सुवा लीलानाथ षर्दार प्रभृति डोला लिन गोरषपूरपट्टि गया.**

**सं. १८८० शुद्धचैत्रशुदि ३ रोज २ मा[८] पाटन सहर मधेसबाट ल्यायाका डोला २ को प्रवेश भयो. भाजुका घर राष्या. तसै दिन भड्यारी काजी प्रभृतिले हजूरमा दर्शन् गऱ्या.**

**१८८० चैत्र १३ रो ४ मा[९] त्रिशूलगंगाको साघुको प्रतिष्टा. तसै दिन डोला कांछाचाहिको प्राणवेध.**

**मार्गशुदि ६ रोज २ मा[१०] दिनगतघटी १६।५ मा पूर्वमुखेन च.ल.व.न.ड.य. एती अक्षरबाट नाम हुन्याले श्री ५ महाराजका विवाहका पात् टीप्न्या सायत्.**

---

६. सम्पूर्ण यस तिथ्यावलीलाई सम्पादन गरी प्रकाश गर्ने विचार मैले गरेको छु ।

७. वि.सं. १८७९ मार्गकृष्ण (पूर्णान्तमानले)

| | गते | वार | तिथि | घडी | पला |
|---|---|---|---|---|---|
| मार्ग | १९ | सोम | चतुर्थी | २४। | २० |

(पात्रोबाट)

८. वि.सं. १८८० चैत्रशुक्ल

| | गते | वार | तिथि | घडी | पला |
|---|---|---|---|---|---|
| वैशाख | ४ | सोम | तृतीया | ३। | १७ ल ४।८ घ २१।७ पाटनमा प्रवेशः |

(पात्रोबाट)

९. वि.सं. १८८० चैत्रशुक्ल

| | गते | वार | तिथि | घडी | पला |
|---|---|---|---|---|---|
| वैशाख | १३ | बुध | त्रयोदशी | १५। | ८ ल १।२२ घ ५।५१ कर्णवेधः |

(पात्रोबाट)

१०. वि.सं. १८८० मार्गशुक्ल

| | गते | वार | तिथि | घडी | पला |
|---|---|---|---|---|---|
| मार्ग | २५ | सोम | षष्ठी | ५७।५५ | दि.ग.घ. १६।५ पूर्वमुख च.ल.व.न.द.य. पात् टीप्न्या |

(पात्रोबाट)

मार्गशुदि १० रो ६[11] दिनशेषघटी २।११ मा उत्तरमुखेन व.क.ह.म.ट.प.र. एती अक्षरबाट नाम हुन्याले श्री ५ महाराजाका विवाहका पात गासन्या सायत्.

पौषशुदि ३ रोज १ मा[12] श्री ५ महाराजबाट संकल्प भै गुह्येश्वरीमा गायत्रीको पुरश्चरण गर्न रंगनाथका पुत्र जीवनाथ पंडित् गया. प्रारंभ पनि गऱ्या.

पौषशुदि १३ रो ४[13] दिनगतघटी ११ बिताई पाटन्बाट २ डोलाको सायत् भयो. तसै दिन शेषघटी ४।४५ मा बालाज्युका दबा(र्बा)रमा डोला प्रवेश भयो.

पौषशुदि १५ रोज ६[14] दिनगतघठी १७।२१ मा उत्तर मुहुडा भै प.र.ज.व.एती अक्षरबाट नाम हुन्याले श्री ५ महाराजको अं(जं)गीनिसान र कंपूका सातै निसान छेक्न्या सायत् भयो. जंगीनीसान तैसै दिन फोईयो.

माघवदि ६ रोज ४[15] दिनगतघटी २।५ मा कंपूका निसान कालीबकस्मा कालिको मूर्त्ति लेषीयो.

एस् दिन तेस्रा प्रहरमा श्री ५ महाराजको व्रतबंध विवाहको लग्न लेखियो तस्मा बस्याका गुरु रंगनाथ पंडित् चौतरा प्राण साह काजी दलभंजन पाँडें पुरोहित रघुनाथ ज्योतिषी लीलानाथ

---

११. वि.सं. १८८० मार्गशुक्ल

| | गते | वार | तिथि | घडी | पला | |
|---|---|---|---|---|---|---|
| मार्ग | २९ | शुक्र | नवमी | ६। | १५ | दि.शे.घ २।११ उत्तर व.क.त.म.ट.प. र पात् गासन्या. |

(पात्रोवाट)

नवमी ६ घडी १५ पलाउप्रान्त दशमी लागेको देखिन्छ।

१२. वि.सं. १८८० पौषशुक्ल

| | गते | वार | तिथि | घडी | पला |
|---|---|---|---|---|---|
| पौष | २२ | आदित्य | तृतीया | ३१।२१ | प्रातः संकल्पः पूर्वांगं मंडपप्रवेशश्च ल ११।१२ घ ११।१३ हीरा पैऱ्हन्या. |

(पात्रोवाट)

१३. वि.सं. १८८० पौषशुक्ल

| | गते | वार | तिथि | घडी | पला |
|---|---|---|---|---|---|
| माघ | ३ | वुध | त्रयोदशी | ३१। | ५ |

(पात्रोवाट)

१४. वि.सं. १८८० पौषशुक्ल

| | गते | वार | तिथि | घडी | पला | |
|---|---|---|---|---|---|---|
| माघ | ५ | शुक्र | पूर्णिमा | २०। | २ | ल १।१५ घ १७।२१ घडी १ भित्र पोसाक पहीरन्या निसान छेक्नु प.र.ज.व. |

(पात्रोबाट)

१५. वि.सं. १८८० माघकृष्ण (पूर्णान्तमानले)

| | गते | वार | तिथि | घडी | पला | |
|---|---|---|---|---|---|---|
| माघ | १० | वुध | षष्ठी | ४९। | ८ | ल ९।२२ घ २।५ पूर्वमु.मूर्ति निसानमा |

(पात्रोबाट)

पांडें पुरुषोत्तम भट्ट भगीरथ जोसी भास्कर जोसी रविदत्त पन्त शर्वरीरम(ण) पंन्त अरविंद गजूर्‍याल् वरपती अर्चार्य ज्योतिषर जोजी(शी) इंदिवर षर्दार इति जना हुन्.

१८८० माघवदि ८ रोज ६ मा[१६] दिनगतघटी ३।५१ मा श्री ५ महाराजका जंगीनिसानमा मूर्त्ति लेषियो.

तसै दिन दिनगतघटी १४ बिताई साहिपाटा लाउन एकदेव वैद्य प्रोहित रघुनाथ कपर्दार गरुडध्वज पाँडें द्वार्‍या बदल्सिं फरास किर्त्तिवीर अडै रुद्रु षर्दार लिलानाथ पांडें सदाशिव घनाल प्रभृति सगुन फलफुल दहि माछा साहिसुंडा २ सुनका बट्टा २ झोली २ किंषाप थान २ प्रभृति ली साहि लाया. उताबाट तिलक लीइ गयाका भारादार र डोलाका २ जना दाज्यूहरू चंदनाक्षत फुल पगडी असर्फी जनै सुपारी पान नरीवल प्रभृति ली आया. श्रीमहाराजलाई तिलक चह्राया.

एसै दिन विनायकशांति प्रारंभ गर्‍या. भट्टराई प्रोहित मुख्याचार्य भया. मूलचोकका उत्तरपट्टिका छिडिमा काम गर्‍या. माघशुदि १ रोज १ का[१७] दिन समाप्त गर्‍या. श्री ५ महाराज पनि यग्यमा बहिराउनुभयो.

एसै दिन दिनगतघटी ८ पले २७ मा कंपुका सातै निसान चह्राया. कर्णेल कप्तानहरू गया. जनरल गयेनन्. येसै दिन जंगीनिसान चह्राया.

एसै सायत्मा श्री ५ महाराजका विवाह व्रतबंधका निमित्त नासल्चोकमा षोडस हातको मंडप तस्का मध्यमा ग्रहयाग चूडा व्रतबंध वेदारंभ समावर्त्तन पंचवेदी हातहातका चार अंगुल उच्चा भयाका उत्तरोत्तर क्रमले बन्या. वस्त्र पनी छेक्या. गणेश लड्डु कलश भार बाध्या. बालाज्युमा पनी वस्त्र पनी छेक्या. गणेश लड्डु कलश भार बाध्या. चौका षोडश हातको ज्येठी रानीका हातले माझमा ४ हातको श्रीधरी वेदी बन्यो.

माघशुदि २ रो २ मा[१८] दिनगतघटी ८ पलेषु २१ मा भार कलश अगाडि गरि भडारषालबाट चोषीमाटी ल्याया. एसै दिन गणेश मातृकापूजा पुण्याहवाचन नांदीश्राद्धादि नाशलचोकका पूर्वपट्टिका छिडिमा भयो.

---

१६. वि.सं. १८८० माघकृष्ण (पूर्णान्तमानले)

| | गते | वार | तिथि | घडी | पला | |
|---|---|---|---|---|---|---|
| माघ | १२ | शुक्र | अष्टमी | ४४। | २८ | नीसान छेक्नु प्रवेश: घ ३।५१ निसानमा मूर्त्ति ल/०।१८ घ ५।११ वस्त्रादि कन्यावरणं |

(पात्रोवाट)

१७. वि.सं. १८८० माघशुक्ल

| | गते | वार | तिथि | घडी | पला | |
|---|---|---|---|---|---|---|
| माघ | २१ | आदित्य | प्रतिपद् | १०। | ११ | ल ११।२७ घ ८।२७ भ.र.म.उ.ल.ई.पूर्वमुखेन निसान चढाउनु पश्चिममुखेन गणेश चौका वस्त्रं कलश भार |

(पात्रोवाट)

१८. वि.सं. १८८० माघशुक्ल

| | गते | वार | तिथि | घडी | पला | |
|---|---|---|---|---|---|---|
| माघ | २२ | सोम | द्वितीया | १५। | १६ | ल ११।२७ घ ८।२१ मंगलमृत्तिका आभ्युदयादि |

(पात्रोबाट)

माघशुदि ३ रो ३ मा[१९] ग्रहशांतिको प्र(प्रा)रंभ अग्निस्थापनं भयो.

माघशु ४ रो ४ क(का)[२०] राति क्षौरार्थको पोटलीकाबंध भयो. एस् दिन रात्रिगतघटी (०।)२७ मा श्रीबडामहारानी[२१] महाराज[२२] का षोपीमा सुकला हुंथो. आप्ना षोपीमा सुकलानिमित्त प्रवेश भयो.

माघशुदि ५ रो ५ का[२३] दिन गायत्रीका पुरश्चरणको प्रसाद चह्राया: तद्दिने दिनगतघटी १।५ षु मामा चूडाकर्म पुनर्गतघटी ३ पलेषु ५५ मा श्रीजीवनाथ पंडित्ले गायत्री सुनाया.

म(मा)सावर्त्तनमा फेरी मुंडन गरेनन्. तीर्थयात्रा गर्दा हात्तीघोडा रथको सायत् भयो. वसंतपूरका लामा खंडसम्म पाउलागनुभयो.

तसै दिन दिनशेषघटी ८।३० मा जंतीका यात्रा गऱ्या. इन्द्रचोक टुडीषेल बारुदषाना गरी बालाज्यु पुग्या. रात्रिगतघटि १ मा विष्णुमतिपारी बालाज्युपट्टि जंती पछ्र्या. फिरंगी पनि सगै थियो. एसै रात्रिघटी १४ म(मा) जागु गराया. यज्ञवेदीमा वरणी गऱ्या. बालाज्युका दर्वारका दलानमा चलाया. बुकवा लाया. विवाह प्रारंभ भयो. रात्रिगतघटी २० पलेषु ४१ मा पहिले ज्येठाको पछि कांछाको करग्रहण गऱ्या. विवाह भयो.

---

१९. वि.सं. १८८० माघशुक्ल

| | गते | वार | तिथि | घडी | पला | |
|---|---|---|---|---|---|---|
| माघ | २३ | मङ्गल | तृतीया | २०। | ० | अग्निस्थापनं |

(पात्रोवाट)

२०. वि.सं. १८८० माघशुक्ल

| | गते | वार | तिथि | घडी | पला | |
|---|---|---|---|---|---|---|
| माघ | २४ | वुध | चतुर्थी | २३। | ० | ल ३।२५ रा.ग.घ. ०।२७ प्रवेश: षोपी |

(पात्रोवाट)

२१. त्रिपुरासुन्दरी

२२. राजेन्द्रविक्रम शाह

२३. वि.सं. १८८० माघशुक्ल

| | गते | वार | तिथि | घडी | पला | |
|---|---|---|---|---|---|---|
| माघ | २५ | बृहस्पति | पञ्चमी | २३। | ४३ | श्री ५ ल १०।२ घ १।५ चूडा ल १०।२४ घ ३।५५ व्रतं ल ७।१२ रा.ग.घ. २०।४१ विवाह: श्रीमहाराजस्य |

(पात्रोवाट)

[वि.सं. १८८० माघ २१ गतेदेखि माघ २४ गतेसम्म टिपोट वि.सं. २०२४ मा काठमाडौंवाट संशोधन-मण्डलद्वारा प्रकाशित पूर्णिमा १४ पूर्णाङ्कका १५६-१६९ पृष्ठमा छापिएको दिनेशराज पन्तको राजज्योतिषी लीलानाथ पाँडे भन्ने निबन्धमा (त्यस पूर्णाङ्कको १६५ पृष्ठमा) छापिएका छन् ।]

२४. वि.सं. १८८० माघशुक्ल

| | गते | वार | तिथि | घडी | पला |
|---|---|---|---|---|---|
| माघ | २६ | शुक्र | षष्ठी | २४। | ९ |

शुक्रवार[२४] शनिवार[२५] आदित्यवार[२६] उहि राजगर्नुभयो. आदित्यवारको रात बिहाउदो बालाज्युदर्बारका दलानमा चतुर्थीकर्म भयो. माहुर सेलाउन बालाज्युका षोलाको र बिष्णुमतिका दोभानमा गया.

माघशुदि ९ रोज २ मा[२७] दिनगतघटी १२ बिताइ बालाज्युबाट अघि ज्येठि रानी ततः कांछी ततो महाराजको पालकी गरी जंती हिड्या. दिनशेषघटी ७ मा टुडीखेलमा जंती पछ्र्या. दिनशेषघ ३ पलेषु ५१ मा हनुमानढोकामा प्रवेश ग(र्नु)भयो. नासलचो(क)मा सियाली आरती कांछा मैयाले गऱ्या. श्रीबडामहारानीका रज भयाको थियो र पाथी भर्नु प्रभृती बृहस्पतिवार[२८] बिहान गऱ्या.

१८८१ ... ज्येष्टशुदि ११ रोज २ मा[२९] दिनगतघटी ८।४७ मा श्रीमहाराज कांछा महारानीको षोपी नास्‌लचोकका पश्चिमपट्टिको कोठामा सऱ्यो.

आषाढवदि ३ रो २ मा[३०] दिनगतघटी ८।४७ मा श्रीज्येठा कांछा महारानीको मोहर बनाउन प्रारंभ गऱ्याको सायत्. छापमा लेष्न्या अक्षर रंगनाथ पंडित्‌ले ठहराई पठायाको.

---

२५. वि.सं. १८८० माघशुक्ल

| | गते | वार | तिथि | घडी | पला |
|---|---|---|---|---|---|
| माघ | २७ | शनि | सप्तमी | २३। | ११ |

(पात्रोवाट)

२६. वि.सं. १८८० माघशुक्ल

| | गते | वार | तिथि | घडी | पला |
|---|---|---|---|---|---|
| माघ | २८ | आदित्य | अष्टमी | २२। | ६ |

(पात्रोवाट)

२७. वि.सं. १८८० माघशुक्ल

| | गते | वार | तिथि | घडी | पला | |
|---|---|---|---|---|---|---|
| माघ | २९ | सोम | नवमी | १९। | ५९ | दि.शे.घ. ३।५१ प्रवेशः |

(पात्रोवाट)

२८. वि.सं. १८८० माघशुक्ल

| | गते | वार | तिथि | घडी | पला |
|---|---|---|---|---|---|
| फाल्गुन | २ | वृहस्पति | द्वादशी | ४ | २ |

(पात्रोवाट)

२९. वि.सं. १८८१ ज्येष्ठशुक्ल

| | गते | वार | तिथि | घडी | पला |
|---|---|---|---|---|---|
| जेष्ठ | २७ | सोम | एकादशी | ४०। | ५० |

(पात्रोबाट)

३०. वि.सं. १८८१ आषाढकृष्ण (पूर्णान्तमानले)

| | गते | वार | तिथि | घडी | पला | |
|---|---|---|---|---|---|---|
| आषाढ | ३ | सोम | तृतीया | ४४। | २९ | ल।१९ दि.ग.घ. ८।४७ मुद्रा |

(पात्रोबाट)

ज्येठाको श्रीष्टदेवताचरण श्रीसाम्राज्यलक्ष्मीदेवी शरण.

कांछाको श्रीष्टदेवताचरण श्रीराज्यलक्ष्मीदेवी शरण.

अठार अक्षर भया पनि साध्य हुंछ बढिया छ भनी पंडीत्ले भन्या.

माथिका कुराबाट श्री ५ राजेन्द्रको विवाहसम्बन्धमा निकै प्रकाश परेको छ। श्री ५ राजेन्द्रको लागि डोला खोज्न गएकामध्येका राजज्योतिषी लीलानाथ पाँडे (पिनाजी नयराज पन्तका वृद्धप्रमातामह)[३१] को पात्रोबाट सो यात्रा कसरी भएको थियो भन्ने बुझिन्छ। त्यसैले त्यस पात्रोमा रहेका सम्बद्ध कुरा तल दिइन्छन्-

वि.सं. १८७९ मार्गकृष्ण (पूर्णान्तमानले)

| | गते | वार | तिथि | घडी | पला | |
|---|---|---|---|---|---|---|
| मार्ग | १९ | सोम | चतुर्थी | २४। | २० | ल ६।२४ घ ४।४१ शेषघटी कांतिपूरतो यात्रा |
| | २० | मङ्गल | पञ्चमी | १९। | ३२ | टंकेश्वर |
| | २१ | बुध | षष्ठी | १५। | ३१ | चित्लांपौवा |
| | २२ | बृहस्पति | सप्तमी | १२। | २५ | चीसापानीगढी |
| | २३ | शुक्र | अष्टमी | १०। | २२ | जंगल |
| | २४ | शनि | नवमी | ९। | ३३ | ल.२।२४ रा.ग.घ. ५।३१ यात्रा हिटौंडा |
| | २५ | आदित्य | दशमी | १०। | १ | बिछाषोरी |
| | २६ | सोम | एकादशी | ११। | ५१ | बिसौलिया ६ |
| | २७ | मङ्गल | द्वादशी | १४। | ४६ | गर्दवल |

---

३१. लक्ष्मीपति पाँडे
|
लीलानाथ
|
विश्वनाथ
|
भुवननाथ
|
यज्ञप्रिया+कृष्णदत्त पन्त
|
नयराज
|
महेशराज — दिनेशराज

(वि.सं. २०२३ मा प्रकाशित पूर्णिमा १२ पूर्णाङ्का ६०-७० पृष्ठमा छापिएको दिनेशराज पन्तको दैवज्ञशिरोमणि लक्ष्मीपति पाँडेका परिवार भन्ने निबन्ध, त्यस पूर्णाङ्को ६० पृ., वि.सं. २०५७ मा काठमाडौंबाट खिलशर्म-राजीवलोचनजोशीस्मारकप्रतिष्ठानद्वारा प्रकाशित अलका शर्मा चालिसेको **नयराज पन्त: जीवनी, व्यक्तित्व र कृतित्व**को ३ पृ.)

### वि.सं. १८७९ पौषशुक्ल क्षयमास

| | गते | वार | तिथि | घडी | पला | |
|---|---|---|---|---|---|---|
| पौष | ४ | मङ्गल | चतुर्थी | ४६। | ५८ | गर्दवल मुकाम ७ |
| | ५ | बुध | पञ्चमी | ४९। | ४ | वकुलहर |
| | ६ | बृहस्पति | षष्ठी | ४९। | ४६ | मुकाम |
| | ७ | शुक्र | सप्तमी | ४९। | ११ | मुकाम ७ |
| | ८ | शनि | अष्टमी | ४७। | २१ | लगडी ७ |
| | ९ | आदित्य | नवमी | ४४। | २८ | मधुवनी ६ |
| | १० | सोम | दशमी | ४०। | ३६ | पट्रौना ५ |
| | ११ | मङ्गल | एकादशी | ३५। | ५७ | कप्तानगंज ७ |
| | १२ | बुध | द्वादशी | ३०। | ४५ | पिपरायिच् ६ |
| | १३ | बृहस्पति | त्रयोदशी | २५। | ५ | गोरषपूर ३ |
| | १४ | शुक्र | चतुर्दशी | १९। | १२ | जयतपूर १ |
| | १५ | शनि | पूर्णिमा | १३। | १९ | मुकाम |

### वि.सं. १८७९ माघकृष्ण क्षयमास

| | गते | वार | तिथि | घडी | पला | |
|---|---|---|---|---|---|---|
| पौष | १६ | आदित्य | प्रतिपद् | ७। | ३६ | छताई |
| | १७ | सोम | द्वितीया | २। | १७ | मुकाम |

### वि.सं. १८७९ माघशुक्ल

| | गते | वार | तिथि | घडी | पला | |
|---|---|---|---|---|---|---|
| माघ | १२ | बृहस्पति | एकादशी | ३। | २१ | मुकाम ९ |
| | | | | ५७। | २८ | |
| | १३ | शुक्र | त्रयोदशी | ५१। | ३५ | बेलघाट |
| | १४ | शनि | चतुर्दशी | ४५। | ५६ | मुकाम ३ |
| | १५ | आदित्य | पूर्णिमा | ४०। | ३१ | शरयू रामघाट चांदिपूर |

### वि.सं. १८७९ फाल्गुनकृष्ण (पूर्णान्तमानले)

| | गते | वार | तिथि | घडी | पला | |
|---|---|---|---|---|---|---|
| माघ | १६ | सोम | प्रतिपद् | ३६। | ० | पुनर्बेलघाट |
| | १७ | मङ्गल | द्वितीया | ३२। | १० | मुकाम |
| | २३ | सोम | अष्टमी | ३३। | ४१ | मुकाम ८ |

| | | | | | | |
|---|---|---|---|---|---|---|
| | २४ | मङ्गल | नवमी | ३६। | ५७ | ल ११८ घ १४।५७ यात्रा भर्सी |
| | २५ | बुध | दशमी | ४१। | ५६ | मुकाम |
| | २६ | बृहस्पति | एकादशी | ४७। | २० | चिलवा कन्यादर्शनं |
| | २७ | शुक्र | द्वादशी | ५२। | ४१ | मुकाम ११ |
| | २८ | शनि | त्रयोदशी | ५७। | ३५ | ताराईनारा |
| | २९ | आदित्य | चतुर्दशी | ६०। | ० | मुकाम |
| फाल्गुन | १ | सोम | चतुर्दशी | १। | ४२ | चिलवा उत्तरारामे |
| | २ | मङ्गल | अमावास्या | ४। | ३६ | मुकाम |

### वि.सं. १८७९ फाल्गुनशुक्ल

| | गते | वार | तिथि | घडी | पला | |
|---|---|---|---|---|---|---|
| फाल्गुन | ३ | बुध | प्रतिपद् | ६। | ३० | ल. ११८ घ. १३।४७ छताई |
| | ७ | आदित्य | पञ्चमी | १। | ४ | ल. ११।२७ घ ६।१३ छानी |

### वि.सं. १८७९ चैत्रकृष्ण (पूर्णान्तमानले)

| | गते | वार | तिथि | घडी | पला | |
|---|---|---|---|---|---|---|
| फाल्गुन | २८ | आदित्य | द्वादशी | ३९। | १४ | ल ११२१ दि.ग.घ. ११।७ यात्रा राजकन्यानां मम च काशीयात्रा |

### वि.सं. १८७९ अधिकचैत्रशुक्ल

| | गते | वार | तिथि | घडी | पला | |
|---|---|---|---|---|---|---|
| चैत्र | ३ | शुक्र | द्वितीया | ४१। | ० | काशिदर्शनं घटी १० षु |
| | ६ | सोम | पञ्चमी | २८। | ४६ | काशितो यात्रा |
| | १२ | आदित्य | द्वादशी | ४९। | ४९ | दिनगतघटी ५ गोरषपूरागमनं |
| | १३ | सोम | त्रयोदशी | ४५। | ५८ | पूर्वाभिमुखगमनं सर्वेषां |

### वि.सं. १८७९ अधिकचैत्रकृष्ण

| | गते | वार | तिथि | घडी | पला | |
|---|---|---|---|---|---|---|
| चैत्र | १९ | आदित्य | चतुर्थी | ४६। | ४२ | सिवाना |
| | २० | सोम | पञ्चमी | ५०। | ५४ | बिछाषोरी |
| | २१ | मङ्गल | षष्ठी | ५५। | ४५ | चिप्ल्याटी |
| | २२ | बुध | सप्तमी | ६०। | ० | भिम्फेदी |
| | २३ | बृहस्पति | सप्तमी | १। | २ | चित्लां |

| | | | | | |
|---|---|---|---|---|---|
| २४ | शुक्र | अष्टमी | ६। | १२ | मुकाम |
| २९ | बुध | त्रयोदशी | १९। | ८ | रात्रिगतघटी १२ मस्म चित्लांतो यात्रा रात्रिशेषे १ श्रीजनरलस्य दर्शनं |

यस पुस्तकमा यस्तो लेखिएको छ-

**राज्यलक्ष्मीका दुई छोरामध्ये साहिंला साहेबज्यू रणेन्द्र र काहिंला साहेबज्यू वीरेन्द्र थिए । उनीहरूको जन्म १८८८ र १८९३ को बीचमा भएको थियो ।**

(२ पृ.)

रणेन्द्रको जन्म वि.सं. १८८८ देखि १८९३ को बीचमा भयो भनी यहाँ लेखिएको छ ।

लक्ष्मीपतिसङ्ग्रहको टिपोटमा यस्तो लेखिएको छ ।

**१७५३।१८८८ मा.सा.**

**१७५४।१८८९ सा.सा.**

साहिँला साहेबज्यू अर्थात् रणेन्द्रको जन्मसाल वि.सं. १८८९ भनी यहाँ लेखिएको छ । यस कारण श्रीप्रकाश ए. राजको लेखाइ ठीक देखिन्छ ।

यस पुस्तकमा यस्तो लेखिएको छ-

**भारत जाने सिलसिलामा २७ वर्षको मात्र उमेर भएकी साम्राज्यलक्ष्मीको औलोको ज्वरले १८९८ असोज २० गते (१८९८ अधिक आश्विनवदी ६) मा स्वर्गवास भयो भनी एकजना इतिहासकारले लेखेका छन् ।[६]**

**(६) ज्ञानमणि नेपाल, पूर्ववत्, १३, पृ. १२५**[३२]

*(६ पृ.)*

वि.सं. १८९८ अधिकआश्विनकृष्ण षष्ठी बुधवार साम्राज्यलक्ष्मीको मृत्यु भयो भनी भाषावंशावलीमा लेखिएको छ ।[३३] वि.सं. १८९८ को पात्रो पल्टाई हेर्दा वि.सं. १८९८

---

३२. वि.सं. २०५० मा ललितपुरबाट साझाप्रकाशनद्वारा प्रकाशित ज्ञानमणि नेपालको नेपालको महाभारतको पहिलो संस्करणको १२५ पृष्ठमा र वि.सं. २०५२ मा साझाप्रकाशनद्वारा प्रकाशित दोस्रो संस्करणको ११३ पृष्ठमा वि.सं. १८९८ आश्विन २० गते साम्राज्यलक्ष्मीको मृत्यु भयो भनी लेखिएको छ ।

ऐ. शि. बाबुराम आचार्यको पुस्तकमा पनि यस्तै लेखिएको छ-

**चौतरिया पुष्कर शाह खोसिएबाट महारानी साम्राज्यलक्ष्मीले आफ्नो अपमान भएको र आफू एक्लिएको महसूस गरिन् । काठमाडौँमा फर्किएको केही समयपछि असमयमा नै पुगनपुग २७ वर्षको उमेरमा यिनको देहान्त भयो (वि.सं. १८९८ असोज २० गते तदनुसार ४ अक्टोबर १८४१) ।**

(वि.सं. २०५५ मा काठमाडौँबाट श्रीकृष्ण आचार्यद्वारा प्रकाशित बाबुराम आचार्यको अब यस्तो कहिल्यै नहोस्को ७५ पृ.)

३३. **श्री ५ जेठा महारानी साम्राज्यलक्ष्मीदेवीलाई व्यथाले च्याप्दा ९८ साल अधिकआश्विनवदि ६ रोज ४ का दिन १२ घडी दिन बाँकीमा धेरै दानपुण्य गरी आर्यघाटमा जलयोग पाएर स्वर्ग भईन् ।**

(वि.सं. २०३० मा काठमाडौँबाट श्री ५ को सरकार शिक्षामन्त्रालय पुरातत्त्वविभागद्वारा प्रकाशित प्राचीन नेपाल २५ सङ्ख्याको ८ पृ.)

अधिकआश्विनकृष्ण षष्ठी बुधवारको दिन आश्विन २२ गते परेको देखिन्छ।[३४] यस कारण साम्राज्यलक्ष्मीको मृत्यु वि.सं. १८९८ आश्विन २२ गते भएको देखिन्छ। यसै प्रसङ्गमा साम्राज्यलक्ष्मीको शुद्धशान्तिको दिन आफ्ना वृद्धप्रमातामह तीर्थराज पाँडेले[३५] जग्गादान पाएको कुरा परेको लालमोहरको सम्बद्ध अंश तल दिइन्छ -

स्वस्ति श्रीगिरिराजचक्रचूडामणिनरनारायणेत्यादिविविधविरुदावलीविराजमानमानोन्नत-श्रीमन्महाराजाधिराजश्रीश्रीश्रीमहाराजराजेन्द्रविक्रमसाहबहादूरसम्सेरजङ्गदेवानां सदा समरविजयिनाम्

आगे तिर्थराज पंडीतके सम्वत १८९८ साल मिति शुद्धआस्वीनशुदि ४ रोज २[३६] का दिन श्रीजेठा रानीका शुद्धशांतिमा श्रीनानी युवराजाधिराजका बाहुलीबाट संकल्प भयाका षेत ५।०

---

३४. वि.सं. १८९८ अधिकआश्विनकृष्ण

| | गते | वार | तिथि | घडी | पला |
|---|---|---|---|---|---|
| आश्विन | २२ | बुध | षष्ठी | २५। | ५९ |

(पात्रोबाट)

३५. गौरीश्वर पाँडे
।
जगन्निवास
।
नारायण
।
वेणीप्रसाद
।
तीर्थराज
।
वामदेव
।
जनकराज
।
वुधकुमारी+नयराज पन्त
।
महेशराज — दिनेशराज

(प्रशस्तिरत्नावलिको २३ पृ., विद्वच्छिरोमणि हेमराज शर्माको ९६ पृ., पोर्ट्रट्स् यान्ड् फोटोग्राफ्स् फ्रम् नेपाल्को ७९ पृ., विजयराज पण्डितको ४८ पृ. र चन्द्रिका व्याकरणको भाषावैज्ञानिक अध्ययनको १३९ पृ., प्राचीन नेपाल १४५ सङ्ख्याको ५२ पृष्ठसमेतको आधारमा यो वंशावली तयार पारिएको हो।)

३६. वि.सं. १८९८ आश्विनशुक्ल

| | गते | वार | तिथि | घडी | पला |
|---|---|---|---|---|---|
| कार्तिक | ४ | सोम | चतुर्थी | ३६। | ७ |

(पात्रोबाट)

मध्ये षेत मुरि ।५० तस्को सरहबमोजीमको घड्यारिस्मेत् हाम्रा वर्ष ३० का उमेर हुदा गादिमभारषबाहिक सर्वाकमाफ बिर्ताबितलप गरिबक्स्यौं. ...

इति सम्वत् १८९९ साल मिति पौषसुदि ५ रोज ६[३७] सुभम्.

(मामा गोविन्दराज पाण्डेका छोरा विभवराज पाण्डेबाट यसको प्रतिलिपि मैले पाएको हुँ ।)

यसै प्रसङ्गमा साम्राज्यलक्ष्मीको मृत्यु हुनुभन्दा केही दिनअघि विजयराज पाँडेले पुराणको साङ्गेमा पाएको जग्गाविषयक कुरा पनि स्मरणीय छ -

(श्री ५ राजेन्द्रविक्रम शाहको प्रशस्ति)

आगे विजयराज पण्डितके संवत् १८९८ मिति प्रथमआश्विनसुदी २ रोज ६[३८] का दिन श्रीनानी युवराजधिराजबाट लगाएको रामायण पुराण सांग्य हुँदा श्रीनानी युवराजधिराजबाट संकल्प भएको खेत १।० तेसको सरहबमोजिमको घडेरीसमेत हाम्रा २८ वर्षको उमेर हुँदा गादिममारखबाहेक सर्वाङ्कमाफ बिर्ताबितलब गरिबक्सेको मोहर ताम्बापत्र गरिबक्स्यौं ... ।

इति सम्वत् १८९८ साल मिति मार्गसुदी ५ रोज ७[३९] शुभम्

*(विजयराज पण्डितका २९, ३० पृ.)*

यस पुस्तकमा यस्तो लेखिएको छ-

**पूर्णिमामा प्रकाशित ६ पत्रमा राज्यलक्ष्मीमाथि बात लागेको कुरा लेखिएको छ । यी पत्रहरू जङ्गबहादुर युरोप जानुभन्दाअघि लेखिएको हो ।**

*(२२ पृ.)*

वि.सं. २०४३ मा प्रकाशित पूर्णिमा ७० पूर्णाङ्कका ३१-३७ पृष्ठमा श्री ५ राजेन्द्रकी कान्छी रानीसम्बन्धी अप्रकाशित छवटा पत्र छापिएका छन् । परराष्ट्रमन्त्रालयबाट सङ्ग्रह गरी

---

३७. वि.सं. १८९९ पौषशुक्ल

| | गते | वार | तिथि | घडी | पला |
|---|---|---|---|---|---|
| मार्ग | २३ | वृहस्पति | पञ्चमी | ५७ | ४० |

(पात्रोबाट)

पत्रमा पौषशुक्ल पञ्चमी शुक्रवार भनी लेखिएको भए तापनि पौषशुक्ल पञ्चमीमा वृहस्पतिवार पर्छ, शुक्रवार पर्दैन ।

३८. वि.सं. १८९८ अधिकआश्विनशुक्ल

| | गते | वार | तिथि | घडी | पला |
|---|---|---|---|---|---|
| आश्विन | ३ | शुक्र | द्वितीया | ५१ | ३३ |

(पात्रोबाट)

३९. वि.सं. १८९८ मार्गशुक्ल

| | गते | वार | तिथि | घडी | पला |
|---|---|---|---|---|---|
| पौष | ६ | शनि | पञ्चमी | ११। | ५५ |

(पात्रोबाट)

ती पत्र मैले छपाएको हुँ । ती पत्रमा कान्छी महारानी राज्यलक्ष्मीको गगनसिंह र दलबहादुर थापासँगको व्यभिचारबारेमा चर्चा छ । गगनसिंह र दलबहादुरसँगको राज्यलक्ष्मीको अनुचित सम्बन्धको बारेमा जङ्गबहादुरको पालामा नेपालस्थित अङ्ग्रेजी दूतावासमा डाक्टरको रूपमा रहेका हेन्रि एम्ब्रोस ओल्ड्फील्डले लेखेका छन् ।[४०] राज्यलक्ष्मी र गगनसिंहको बीचमा रहेको अनुचित सम्बन्धको बारेमा जङ्गबहादुरका छोरा पद्मजङ्गले चर्चा गरेका छन् ।[४१] गगनसिंहसँग राज्यलक्ष्मीको व्यभिचारबारेको चर्चा परम्परादेखि नै चलेर आएको छ । लक्ष्मीपतिसङ्ग्रहको टिपोटबाट गगनसिंहको जन्म वि.सं. १८५३ मा भएको देखिन्छ ।[४२] लक्ष्मीपतिसङ्ग्रहको टिपोटबाट वि.सं. १८७४ मा राज्यलक्ष्मीको जन्म भएको कुरा हामीले थाहा पाएका छौं । वि.सं. १९०६ मै राज्यलक्ष्मीसँग व्यभिचारको बात लागिसकेका[४३] दलबहादुर थापाको जङ्गबहादुरसँग त्यसभन्दा पछि पनि सुसम्बन्ध रहेको देखिएको छ ।[४४] यस अवस्थामा गगनसिंह र दलबहादुरसँगको राज्यलक्ष्मीको व्यभिचारको आरोपमा जङ्गबहादुरको राजनीति पनि घुसेको छ कि भनी विचार गर्नुपर्ने अवस्था भने आइसकेको छ ।

यस पुस्तकका गुणदोषको बारेमा सामान्य चर्चा माथि गरियो । सबैको चर्चा यस सानो मन्तव्यमा गर्नु सम्भव छैन । श्रीप्रकाश ए. राजले एउटा चाखलाग्दो र महत्त्वपूर्ण विषयलाई आफ्नो पुस्तकमा समेट्ने प्रयत्न गर्नुभएको छ । उहाँको यस कामबाट अरूलाई पनि यस विषयमा कलम चलाउने प्रेरणा मिल्नेछ भन्ने मलाई लागेको छ ।

आफ्ना पितामह विद्वच्छिरोमणि हेमराज शर्माबाट विशेष रूपमा प्रभावित प्रकाश ए. राजको लेखनी यसरी नै निरन्तर चल्दै जाओस् र उहाँको लेखनीद्वारा अरू पनि नयाँनयाँ कुरा प्रकाश हुँदै जाओस् भन्ने आशाका साथ आफ्नो सानो मन्तव्य यहीं टुङ्ग्याउँछु ।

वि.सं. २०५९ भाद्र २६ गते बुधवार — **दिनेशराज पन्त**

---

४०. वि.सं. १९३७ मा लन्डनवाट डब्ल्यू.एच.एलेन यान्ड् कम्पनिद्वारा प्रकाशित हेन्रि एम्ब्रोस् ओल्ड्फील्ड्को **स्केचेज् फ्रम् निपाल्, हिस्टोरिकल् यान्ड् डिस्क्रिप्टिभ्** (नेपालको ऐतिहासिक र वर्णनात्मक चित्रण) को १ भागको ३५३-३५४, ३८७ पृ.

४१. वि.सं. १९६५ मा अलाहाबादवाट प्रकाशित पद्मजङ्गको **लाइफ् अफ् महाराज् सर् जङ्गबहादुर अफ् नेपाल्** (नेपालका महाराज जङ्गवहादुरको जीवनी) को ६६ पृ.

४२. १७।८।१८५३ गगनसिं
(लक्ष्मीपतिसङ्ग्रहको टिपोट)

४३. **पूर्णिमा**, ७० पूर्णाङ्कका ३१, ३३, ३४, ३७ पृ.

४४. ऐजन् ३७ पृ.

# भूमिका

यो पुस्तक नेपालको एक प्रसिद्ध नारीको जीवनी हो, जसले गर्दा इतिहास नै बदलियो । भारतको गोरखपुरको राजपूत परिवारमा जन्म लिएर छ वर्षको उमेरमा यिनको विवाह नेपालका राजा राजेन्द्रसँग हुन गयो, जसको उमेर दश वर्षको थियो । राजेन्द्रको विवाह साम्राज्यलक्ष्मीसँग पनि भएको थियो जो पनि उनी जस्तै गोरखपुरमा जन्मेकी थिइन् । त्यसताका राजपरिवारमा एकभन्दा बढी रानीसँग विवाह गर्ने चलन थियो । यस्तो विवाह एउटै जग्गेमा पनि हुने गर्दथ्यो । साम्राज्यलक्ष्मी र राज्यलक्ष्मीको पनि यसैगरी विवाह भएको देखिन्छ । नेपालको शाहवंशमा यसरी एउटै जग्गेमा दुई विवाह गर्ने चलन वि.सं. १९७५ मा श्री ५ त्रिभुवनको विवाह हुँदासम्म पनि चलिरह्यो । अवधी भाषा बोल्ने परिवारबाट नेपाली भाषा बोल्ने नेपालको राजपरिवारमा विवाह भई काठमाडौं आएपछि उनलाई नेपाली भाषा त सिक्न कठिन भएन होला किन कि नेपाली, हिन्दी र अवधीको बीच धेरै कम फरक छ । त्यस बेला काठमाडौंको हनूमान्ढोका अहिले जस्तै नेवारीभाषी घना बस्तीमा रहेको थियो ।

विवाह भएर आएपछि राज्यलक्ष्मी जम्मा तेइस वर्षसम्म नेपाल बसिन् । राजा राजेन्द्रबाट यिनका दुई छोरा रणेन्द्र र वीरेन्द्र जन्मेका थिए । जेठी महारानी साम्राज्यलक्ष्मीको पनि छैटौं पुस्तापछि जन्म भएको बालकको नाम पनि वीरेन्द्र राखिएको थियो जो वि.सं. २०२८ देखि २०५८ सम्म लगभग तीस वर्षसम्म नेपालको राजा भएका थिए ।

राज्यलक्ष्मीकी सौता जेठी महारानी साम्राज्यलक्ष्मीका तीन छोरा थिए । राजाको जेठा छोरा नै राज्यको उत्तराधिकारी बन्ने परम्परा भएको हुनाले साम्राज्यलक्ष्मीकै छोरा सुरेन्द्र युवराजाधिराज भए । आफ्नो उमेर चौबीस वर्ष पुगेपछि राज्यलक्ष्मीले आफ्नो हातमा हुकुम चलाउने अधिकार पनि राजा राजेन्द्रबाट पाइन् । सुरेन्द्रको सट्टा आफ्नो छोरा रणेन्द्रलाई गद्दीमा राख्न पाइयोस् भनेर नेपालको इतिहासमै कोतपर्व र भण्डारखाल पर्वको उनी प्रमुख पात्र बनिन् । यसैबेला नेपालको राजनीतिमा जङ्गबहादुरको प्रादुर्भाव भइसकेको थियो र उनन्तीस वर्षकै उमेरमा राज्यलक्ष्मीले निर्वासित भई वाराणसी जानु पर्‍यो ।

वि.सं. १९०३ मार्गमा राजा राजेन्द्र पनि उनीसँगै वाराणसी गएर दुई महिना सँगै बसे। राजेन्द्रले वि.सं. १९०४ को शुरूमा जङ्गबहादुरलाई अपदस्थ गरी फेरि सत्ता आफ्नो हातमा लिन खोज्दा सुरेन्द्रलाई श्री ५ महाराजाधिराज घोषित गरियो। राजेन्द्रले केही सैनिक जम्मा गरी नेपालमा हमला गर्न खोज्दा हालको नारायणी अञ्चलको अलौमा उनको हार भई उनलाई काठमाडौं लगियो। काठमाडौंमा चौंतीस वर्षसम्म नजरबन्द रही छोराको स्वर्गवास भएको केही महिनापछि पनाति राजा भएको देखी उनको वि.सं. १९३८ मा स्वर्गवास भयो। वि.सं. १९०३ पछि राज्यलक्ष्मीको राजेन्द्रसँग भेट भएन। भारतको हाल उत्तर प्रदेशको गोरखपुरमा जन्म भएकी राज्यलक्ष्मीले वाराणसीमा लगभग त्रिपन्न वर्षसम्म बसिन्। गोरखपुरबाट वाराणसी धेरै टाढा छैन। अहिले पनि यो पूर्वी उत्तर प्रदेशको पछाडि परेका इलाका हो, जहाँ कमै मात्रामा विकास भएको छ। कोतपर्व अथवा भण्डारखालपर्वमा उनको उद्देश्य पूरा भएको भए नेपालको राजसिंहासनमा सुरेन्द्रको सट्टा रणेन्द्र बस्दथे र श्री ५ पृथ्वीवीर, त्रिभुवन, महेन्द्र, वीरेन्द्र र ज्ञानेन्द्रलाई राजा हुने अवसर नै आउँदैथ्यो। जुन छोरा रणेन्द्रलाई राजा बनाउनको निमित्त राज्यलक्ष्मीले अनेक पर्व गरिन्, वाराणसीमा सम्पत्तिको मामलामा उनैले आमामाथि नालिस हाले। आफ्ना जेठा छोरालाई नेपालको राजा बनाउने आकांक्षा पूरा हुन नसके पनि कान्छा छोरा वीरेन्द्रपट्टिका नाति मोहनविक्रम शाह (प्रथम) भने रामनगरको 'राजा' बन्न पाए। रामनगर विहारको पश्चिमी भागमा रहेको सानो राज्य थियो, जुन नेपालको चितवनबाट नजिक रहेको छ। जीवनको अन्तितिर बुढेसकालमा छोरा नभए पनि नाति राजा हुन पाएकोमा राज्यलक्ष्मीलाई खुशी नै लागेको थियो होला। तर मोहनविक्रम शाहको कोही सन्तान नभएकोले 'धर्मपुत्र' लिनुपर्‍यो।

यस पुस्तकमा नेपालको इतिहासमा नै नाम चलेको एक पात्रको जीवनी लेख्ने प्रयास गरिएको छ। यसको निमित्त प्रकाशित पुस्तक र पत्रिकाहरूबाट सामग्री लिइएको छ।

जति समय बित्दै जान्छ, इतिहासका अनेक दस्तावेज र पात्रहरूको सम्झना पनि मेटिंदै जान्छ अथवा लोप हुन्छ। मेरो उमेर दश वर्षको हुँदासम्म मेरा पितामह हेमराज जीवितै हुनुहुन्थ्यो र वि.सं. २०१० मा म पनि वाराणसीको मामूरगंजमा हाम्रो घरमा उहाँसँगै डेढ महिना बसेको थिएँ। नेपालबाट निर्वासित भएकी राज्यलक्ष्मी पनि बनारसकै मामूरगंजको इलाकामा बसेकी थिइन्। उनी वि.सं. १९५६ सम्म जीवितै थिइन्। जुनबेला काशीमा वीरशम्सेरको आज्ञाले शिरोमणि आचार्यले यज्ञ गरी शिरोमणि दीक्षित भएका थिए। त्यस यज्ञमा हेमराजको पनि उपस्थिति थियो। उहाँ त्यसबेला वाराणसीमा नै अध्ययन गर्दै हुनुहुन्थ्यो र त्यसताका गंगाजीको किनारामा रहेको बुलानालाको घरमा बस्नुहुन्थ्यो। उहाँलाई राज्यलक्ष्मीबारे कैयौं कुरा थाहा थियो होला। म बालकै थिएँ,

यसबारे अहिले जस्तो चाख थिएन, उहाँले पनि आफ्नो डायरी अथवा संस्मरणमा यसबारे केही लेख्नु भएन। मोहनविक्रम शाह द्वितीय (रामराजा) (उपेन्द्र विक्रमका पनाति) को हेमराज गायत्री मन्त्र सुनाउने गुरु हुनुहुन्थ्यो। वि.सं. २०२६/२७ तिर म काठमाडौँको 'द राइजिङ्ग नेपाल' भन्ने अंग्रेजी पत्रिकामा काम गर्दथेँ। त्यसताका गोरखापत्रका सम्पादक हुनुहुन्थ्यो गोपालप्रसाद भट्टराई, जो जनआन्दोलनपछि पहिलो प्रधानमन्त्री हुने कृष्णप्रसाद भट्टराईका दाजु हुनुहुन्थ्यो। उहाँका बराजु राज्यलक्ष्मीसँगै नेपालबाट बनारस जानुभएको थियो। उहाँका पिताज्यू रामनगरको राज्यको पनि पुरोहित हुनुहुन्थ्यो। गोपालजीलाई त्यसबेला राज्यलक्ष्मी र रामनगरबारे कुरा सोधेको भए कति थाहा हुन्थ्यो जस्तो लाग्छ अहिले।

विजयराजकै कारणले पनि भण्डारखालपर्व सफल हुन पाएन। वि.सं. १९०३ देखि १९५६ सम्म राज्यलक्ष्मी वाराणसीको मामूरगंजमा थिइन् भने वि.सं. १९२१ देखि १९३५ सम्म विजयराज पनि काशीवास गर्न गंगाजीको किनारामा रामघाटको घरमा बसेका थिए। विजयराजले कुनै संस्मरण नलेखेका हुनाले र यस विषयमा उनले केही कुरा गरेका व्यक्ति भएपनि हाल जीवित नभएकाले यस विषयको जानकारी पनि विस्मृतिको गर्भमा गइसक्यो।

यो पुस्तक लेख्न सामग्री संकलन गर्ने काममा सहयोग गर्ने इतिहासकार श्रीदिनेशराज पन्त, श्रीज्ञानमणि नेपाल र श्रीत्रिरत्न मानन्धरलाई धन्यवाद दिन्छु। आफ्नो संग्रहमा रहेको पुस्तक हेर्न दिनु भएकोमा मदनपुरस्कारगुठीका अध्यक्ष श्रीकमल दीक्षित र श्रीरोचक घिमिरेलाई पनि धन्यवाद दिन्छु।

वि.सं. २०५९ भाद्र — प्रकाश ए.राज

# दोस्रो संस्करणको भूमिका

वि.सं. २०५९ मा **कोतपर्वकी महारानी राज्यलक्ष्मी**को पहिलो संस्करण प्रकाशित भयो। प्रकाशित भएको एक वर्षभित्रै निकै प्रति बिक्री पनि भयो। श्रीदिनेशराज पन्तले लेखिदिनुभएको मन्तव्यमा त इतिहासमानै अहिलेसम्म प्रकाशमा नआएका कुरा पनि आए। उदाहरणको निमित्त साम्राज्यलक्ष्मी र राज्यलक्ष्मीको जन्ममिति र उनीहरूको डोला खोज्न को-को, कसरी भारतको गोरखपुर गएका थिए आदि। वि.सं. १८८० को वसन्तपञ्चमीमा बालाजुमा एकै जग्गेमा भएको राजेन्द्रको साम्राज्यलक्ष्मी र राज्यलक्ष्मीसँग भएको विवाहवारे विस्तृत विवरणलाई पनि ऐतिहासिक सामग्री नै भन्नु पर्ला। म आफैले "विजयराज पण्डित" शीर्षक पुस्तकमा श्री ५ राजेन्द्र भण्डारखाल पर्वपछि वाराणसी जाँदा विजयराजलाई पठाएको चार पत्रमा उनले तेस्रो विवाह गर्न कोशिस गरेकोसमेत कुरा प्रकाशमा ल्याएका थिएँ।

वि.सं. १९०३ मा शुरू भएको १०४ वर्षको राणाशासनको कारक राज्यलक्ष्मी वनिन्। यसवाट प्रभावित नहुने कुनै नेपाली छैन होला। राज्यलक्ष्मीको कारण नेपाल देश प्रभावित हुनको साथै म आफू कसरी प्रभावित भएँ, त्यसबारे पनि केही लेख्न मन लाग्यो।

मभन्दा नौ पुस्ता अगाडिका गौरीश्वर तनहुँका राजा त्रिविक्रम सेन र गोरखाका राजा नरभूपाल शाहका गुरु थिए। राज्यलक्ष्मीको विवाह नरभूपाल शाहकै पाँचौ पुस्ताका वंशज राजेन्द्रसँग भएको थियो। कोतपर्व र भण्डारखालपर्वपछि उनी वाराणसीमा निर्वासित हुन पुगिन् र आफ्ना जेठा छोरालाई नेपालको राजगद्दीमा राख्ने उनको अभिलाषा पूरा हुन सकेन। तैपनि उनका कान्छा छोराको विवाह रामनगरका राजा प्रह्लाद सेनकी छोरीसँग भयो। प्रह्लाद सेनका छोरा नभएकोले राज्यलक्ष्मीका नाति मोहनविक्रम शाह (प्रथम) नै रामनगरका राजा भए।

राज्यलक्ष्मीको इच्छा पूरा हुन नदिनेमा जङ्गबहादुर र विजयराज भए। भण्डारखालपर्व सफल भएको भए नेपालको राजगद्दीमा सुरेन्द्रको सट्टा रणेन्द्र बस्दथे होला। त्यसपछि श्री ५ त्रिभुवन, महेन्द्र, वीरेन्द्र र ज्ञानेन्द्रलाई गद्दीमा बस्ने मौका मिल्दैनथ्यो होला। के

जङ्गबहादुर नभएको भए अंग्रेजशासित भारतबाट सुगौलीको सन्धिमा नेपालले गुमाएको नयाँ मुलुक (बाँके, बर्दिया, कैलाली, कञ्चनपुर) फिर्ता आउँथ्यो होला ? । चन्द्रशमसेरले सन् १९२३ को सन्धि ब्रिटिशसँग नगरेको भए सन् १९४७ मा अंग्रेजले भारत छोडेपछि नेपालले आफ्नो स्वतन्त्र अस्तित्व कायम गर्न सक्थ्यो होला ? । राणाशासन नभएको भए नेपाली जनता अहिलेभन्दा बढी सम्पन्न हुन्थे होलान् र के नेपालको बढी विकास हुन्थ्यो होला ? । यी सब प्रश्न इतिहाससँग सोध्ने कुरा हुन् । मेरा पितामहलाई चन्द्रशमसेरकी कान्छी बडामहारानीले वाराणसीमा एक घर कोटिहोममा दिएकी थिइन् जुन त्यही इलाकामा थियो जहाँ राज्यलक्ष्मीले मामुरगञ्जमा घर जग्गा किनेकी थिइन् । हाल हाम्रो सो घर बिक्री भइसकेको छ ।

जङ्गबहादुरकी छोरी दीपकुमारी (बागकी कान्छीमैयाँ) पनि नेपालबाट निर्वासित भएपछि वाराणसीमा नै आएर वि.सं. १९४४ देखि करीब पन्ध्र वर्ष बसेकी थिइन् । रामनगरका राजा हुन पुगेका राज्यलक्ष्मीका नाति मोहनविक्रम शाहको सन्तान भएन र धर्मपुत्र लिनुपर्‍यो । उनले धर्मपुत्र लिन पुगे मोहनविक्रम शाह (द्वितीय) जसलाई रामराजा पनि भनिन्थ्यो । यसरी राज्यलक्ष्मीको नातिका धर्मपुत्र सुरेन्द्रविक्रमका भाइ उपेन्द्रविक्रमका छोरा धीरेन्द्रविक्रम र उनकी पत्नी दीपकुमारीका नाति मोहनविक्रम शाह (द्वितीय, रामराजा) हुन पुगे । राज्यलक्ष्मीले साम्राज्यलक्ष्मीका छोरा सुरेन्द्रले राजगद्दी नपाउन् भनी कोशिस गरिन् र उनको इच्छापूर्तिमा बाधक जङ्गबहादुर थिए । रामराजाका मन्त्र सुनाउने गुरु हेमराज थिए जो विजयराजका पनाति थिए र मेरा पितामह थिए । वि.सं. १९४२ मा रणोद्दीपसिंहको हत्यापछि जङ्गबहादुरका छोराहरू श्री ३ महाराज हुने रोलक्रमबाट हटे र धीरशमसेरका सन्तानले मात्र श्री ३ महाराज हुन पाउने भए । यो परिवर्तन गराउनमा बागकी कान्छीमैयाँको निर्णयात्मक भूमिका थियो भन्ने कुरा मैले उनको जीवनीमा उल्लेख गरेको छु ।

मेरा पिताज्यू केसरिराज पाण्डे श्री ५ वीरेन्द्रको समयमा बडागुरुज्यू हुनुभयो । वंशपरम्पराअनुसार बडागुरुज्यू हुने चलन वि.सं. २०२३ मा बनेको नियमले नै हटिसकेको थियो । एक्काइस वर्ष यूनेस्कोमा काम गरी पेरिस बसी नेपाल फर्केपछि उहाँलाई सो पद मिलेको थियो । वि.सं. २०५५ मा उहाँलाई श्री ५ वीरेन्द्रबाट बडागुरुज्यूको पदवी बक्सने बेला नेपालमा बहुदलीय प्रजातन्त्र आइसकेको थियो र त्यस लालमोहरमा दस्तखत गर्ने व्यक्ति थिए प्रधानमन्त्री कृष्णप्रसाद भट्टराई, जसका बराजू राज्यलक्ष्मीको साथै लागी वि.सं. १९०३ सालमा वाराणसी गएका थिए र त्यहीं बसोबास गरेका थिए । मेरा पिताज्यूकै जिजुबराज्यू विजयराजले वि.सं. १९०४ मा श्री ५ सुरेन्द्रलाई श्रीपेच पहिराएका थिए । वि.सं. २०५८ को दरबारहत्याकाण्डमा परी श्री ५ वीरेन्द्रको स्वर्गारोहणको साथसाथै वंशनाश भयो । त्यसबेला बडागुरुज्यू रहनुभएका मेरा पिताज्यूले श्री ५ ज्ञानेन्द्रलाई वि.सं. २०५८ जेठमा श्रीपेच पहिराउनुभयो । यो त एक संयोग मात्र थियो ।

वि.सं. २००७ मा श्री ५ ज्ञानेन्द्रको पहिलो पटक राज्यारोहण हुँदा मेरा पितामह हेमराजले श्रीपेच पहिराउनुभएको थियो ।

मैले अष्ट्रेलियाको पर्यटक पुस्तक प्रकाशक लोन्ली प्लानेट (Lonely Planet) को निमित्त नेपाल र भारतको पथप्रदर्शकपुस्तक (Tourist Guide Book) लेखें । भारतको पुस्तक लेख्दा आफूले लेखेको इलाकामा वाराणसी पनि परेको थियो । **"नेपालका शाहवंशका महारानीहरू"** शीर्षक पुस्तक अंग्रेजीमा लेखें । वि.सं. २०५८ को राजदरबार हत्याकाण्डबारे मैले अंग्रेजीमा लेखेको पुस्तक Kay Gardeko — The Royal Massacre in Nepal भारतको रूपा प्रकाशनबाट प्रकाशित भएको छ । हाल मात्र विद्रोही माओवादीबारे अध्ययन "Maoists in the Land of Buddha" भारतकै निराला प्रकाशनले प्रकाशित गरेको छ । माओवादी आन्दोलनको प्रमुख उद्देश्य राजसंस्थाको उन्मूलन र नेपालमा गणतन्त्रको स्थापना हो । कृष्णप्रसाद भट्टराईले वि.सं. २०४६ मा नेपालमा वहुदलीय प्रजातन्त्र ल्याउन योगदान गरे । वि.सं. २०४७ देखि २०५९ सम्म बाह्र वर्षको अवधिमा नेपालमा सुशासनको अभाव र भ्रष्टाचारको संस्थाकरण र प्रशासनको राजनीतिकरण भयो । यही थियो माओवादी विद्रोह फैलनुको मुख्य कारण । कृष्णप्रसाद भट्टराई यस अवधिमा दुई दुई पटक प्रधानमन्त्री भएकाले यस्तो स्थिति ल्याउनमा केही उत्तरदायित्व उनले पनि वहन गर्नुपर्ने हुन्छ । उनकै प्रधानमन्त्रित्वकालमा अञ्चलाधीशको व्यवस्था हटाइयो र उनकै पालामा पुलिस र गुप्ती पुलिस (Intelligence) को धेरै राजनीतिकरण भयो । यसरी नेपालमा माओवादी विद्रोहलाई फल्न फुल्न दिनुमा राज्यलक्ष्मीका पुरेतका नाति कृष्णप्रसाद भट्टराईको पनि अप्रत्यक्ष रूपले योगदान छ ।

म नेपाली र अंग्रेजी भाषाको लेखक हुँ । नेपालको एकीकरण हुनुभन्दा अगाडि नरभूपाल शाहको पालाभन्दा अगाडिदेखि अहिले बहुदलीय प्रजातन्त्र आएपछि श्री ५ ज्ञानेन्द्रको राज्यारोहण हुने बेलासम्म पनि नेपालको इतिहाससँग मेरा पूर्वजहरूको केही न केही रूपमा संलग्नता रहेको छ । मेरा पितामहले एक विशाल पुस्तकालयको सङ्ग्रह गर्नुभएको थियो, जुन हाल सरकारले खरिद गरी नेपाल राष्ट्रिय पुस्तकालय बनेको छ । उहाँले केही ऐतिहासिक दस्तावेजको पनि संग्रह गर्नुभएको थियो । तीमध्ये एउटा यस्तो दस्तावेज भेटियो जसबाट श्रीदिनेशराज पन्तले श्री ५ राजेन्द्रको वि.सं. १८८० मा बालाजुमा भएको विवाहबारे विस्तृत विवरण पत्ता लगाउनुभयो । त्यसलाई यो पुस्तकमा पनि समावेश गरिएको छ ।

२०६० फागुन

– **प्रकाश ए.राज**

# गोरखपुरमा जन्म (१८७४ साल)

राज्यलक्ष्मीको जन्म भारतको हाल उत्तरप्रदेशको गोरखपुरमा भएको थियो ।[१] जेठीमहारानी साम्राज्यलक्ष्मी र कान्छी महारानी दुवैको जन्म गोरखपुरकै राजपूत वंशमा भएको थियो । 'गोरखपुर' भन्दा गोरखपुर शहर मात्र नभई हालको देवरिया, बस्ती र महाराजगंज जिल्लामा हुन सक्दछ ।

राज्यलक्ष्मीको दाजुको नाम जयसिंह थियो ।[२] साम्राज्यलक्ष्मीको जन्म गोरखपुरकै चिलवा भन्ने ठाउँमा भएको थियो ।[३] अहिले वि.सं. २०६१ मा त भारतको पूर्वी उत्तर प्रदेश कृषिमा आधारित र पछाडि परेको छ भने वि.सं. १८७० तिरको गोरखपुर कस्तो थियो होला अनुमान गर्न सकिन्छ ।

राज्यलक्ष्मीको जन्ममितिको बारेमा के अनुमान गर्न सकिन्छ भने राजेन्द्रको जन्ममिति १८७० साल मार्ग हुनाले पतिको उमेरभन्दा पत्नीको उमेर कम हुने चलन भएकोले र ज्यादै सानो उमेरमा विवाह हुने हुनाले पनि पतिपत्नीको उमेरको बीच धेरै फरक पनि हुँदैनथ्यो । श्रीदिनेशराज पन्तज्यूले लक्ष्मीपतिसंग्रहको टिपोटलाई आधार मानी साम्राज्यलक्ष्मीको जन्म वि.सं. १८७२ कार्तिक र राज्यलक्ष्मीको जन्म वि.सं. १८७४ भाद्रमा भएको भनी देखाउनुभएको छ । भारतको गोरखपुर जिल्ला त्यसताका इस्ट इण्डिया कम्पनीको शासन अन्तर्गत थियो ।

गोरखपुरदेखि दक्षिण वासगांव तहसीलमा चिलहा भन्ने गाउँ रहेको छ । त्यहाँ अहिले पनि एक किल्ला छ, जहाँ एक स्कूल चलिरहेको छ । साम्राज्यलक्ष्मीको बुबाको नाम प्रभु शाह थियो । यसै वंशमा तौलिहवानिवासी गयाप्रसाद शाहको पनि जन्म भएको थियो । जसको बाजे शिवगोविन्द चन्दलाई सन् १८५७ को अंग्रेजहरूको विरुद्ध विद्रोहमा भाग लिएकोले अंग्रेजहरूले फाँसीको सजाय दिएका थिए, तर जङ्गबहादुरको सिफारिसमा मृत्युदण्डलाई देश-निकालाको सजायमा बदलिएको हुनाले पूरा परिवार नेपालको हाल कपिलवस्तु जिल्लाको तौलिहवा जिल्लामा आएको थियो ।[४] गयाप्रसाद शाहले वि.सं. २००७ मा श्री ५

त्रिभुवनको भारतीय राजदूतावासमा पलायन भएपछि बोलाइएको भारदारी सभामा श्री ५ त्रिभुवनलाई नै बोलाएर ल्याउनु पर्दछ भनेका थिए। राजेन्द्रको लागि ड़ोला खोज्न भीमसेन थापाले पठाउँदा साम्राज्यलक्ष्मी र राज्यलक्ष्मी दुवैलाई चिलवा गाउँबाट ल्याएकोले दुवै त्यहींका राजपूत कन्या देखिन्छन्। श्री ५ राजेन्द्रले राज्यलक्ष्मीको बारे लेखेको पत्रमा "जयसिंहकी बहिनी" भनी लेखेका छन्।[५]

तसर्थ राज्यलक्ष्मीको पिताको नाम "सिंह" थर भएका कोही थिए होलान्। साम्राज्यलक्ष्मी र राज्यलक्ष्मी साख्खै दिदीबहिनी नभए पनि एउटै गाउँबाट आएका थिए कि ? दिदीवहिनी पर्ने डोला खोज्न किन भीमसेन थापाले नेपालको सिमानाबाहिर भारतमा पठाए ? नेपालमा तत्काल प्रतिष्ठित क्षेत्री अथवा ठकुरी परिवारबाट राजेन्द्रको विवाह गराएनन् ? उनका सम्बन्धीबाट आफ्नो निरंकुश शासनमा बाधा पुग्न सक्ने हुनाले पनि त्यसो गरेको हुन सक्दछ।

भारतमा जन्मेका राजपूत कन्याहरूसँग विवाह गर्ने परम्परा शाहवंशमा निकै पहिलेदेखि चलिआएको थियो। पृथ्वीनारायण शाहले बनारसकी नरेन्द्रलक्ष्मीलाई गोरखामा डोला ल्याई विवाह गरेका थिए।[६]

पृथ्वीवीर विक्रमको जेठा र माहिला बडामहारानीहरूको जन्म भारतको तत्काल पंजाव राज्य (हाल हिमाञ्चलप्रदेश) को काँगडामा जन्म भएको थियो। श्री ५ त्रिभुवनको दुई बडामहारानी कान्तिराज्यलक्ष्मी र ईश्वरीराज्यलक्ष्मीको जन्म भारतको उत्तर प्रदेशको खीरी जिल्लाको सीतापुर भन्ने ठाउँमा भएको थियो, जुन कैलाली जिल्लाको दक्षिणमा पर्दछ। ■

## सन्दर्भ ग्रन्थ


*(१) रामजी उपाध्याय, **नेपालको इतिहास अथवा दिग्दर्शन**, सुब्बा होमनाथ केदारनाथ, बनारस, २००७, पृ. २२५*

*(२) ज्ञानमणि नेपाल, **नेपालको महाभारत**, साझा प्रकाशन पृ. २५१*

*(३) ज्ञानमणि नेपाल, **नेपालको महाभारत**, साझा प्रकाशन, पृ. २१६*

*राजेन्द्रले गोरखपुरको चिलवानिवासी आफ्नी सासूलाई १८९८ माघवदि २ मा हिन्दी भाषामा लेखेको पत्रमा साम्राज्यलक्ष्मीको दाजुको आगोमा जलेर मृत्यु भएको कुरा लेखेका थिए।*

*(४) शेखरसिंह गौतम, **हिमवर्ष और नेपाल***

*(५) ज्ञानमणि नेपाल, **नेपालको महाभारत***

*(६) दिनेशराज पन्त, **गोरखाको इतिहास***

# बालाजुमा राजेन्द्रसँग विवाह र दुई पुत्र जन्म

श्री ५ राजेन्द्रसँग साम्राज्यलक्ष्मी र राज्यलक्ष्मी दुवैको विवाह वि.सं. १८८० को श्रीपञ्चमीको दिन माघ २५ गते भएको थियो। उक्त विवाह काठमाडौं उपत्यकामा रमणीय मानिने ठाउँ वालाजुमा भएको थियो।[1] उक्त विवाहको वारेमा सुन्दरानन्द वाँडाले पनि लेखेका छन्।[2] त्यसवेला साम्राज्यलक्ष्मीको उमेर ८ वर्ष र राज्यलक्ष्मीको ६ वर्ष थियो।

त्यसताका शाहवंशमा कम उमेरमा विवाह गर्ने चलन थियो। विवाहको एक उद्देश्य त राज्यको निमित्त उत्तराधिकारी प्रदान गर्न पनि थियो। श्री ५ पृथ्वीवीरविक्रमका चार वडामहारानीमध्ये जेठी र माहिली वडामहारानी (श्री ५ त्रिभुवनको मुमा) को वि.सं. १९४३ मा विवाह भएको थियो जुनवेला श्री ५ पृथ्वीवीरको उमेर एघार वर्षमात्र थियो।

श्री ५ त्रिभुवनका जेठा वडामहारानी कान्तिराज्यलक्ष्मी र कान्छा वडामहारानी ईश्वरीराज्यलक्ष्मीसँग वि.सं. १९७५ मा वाह्र वर्षको उमेरमा विवाह भएको थियो। त्यसताका राजपरिवारमा विवाह गर्नुभन्दा अगाडि डोला ल्याउने पनि चलन थियो। 'डोला' को तात्पर्य विवाहभन्दा केही महिना अगाडि कन्यालाई ल्याएर दरवारिया चालचलनवारे वताउनेसमेत थियो। राजेन्द्रको निमित्त डोला खोज्न जाने टोली वि.सं. १८७९ मंसीर १९ गते काठमाडौंवाट हिंडेको थियो। चितलाङ, चिसापानीगढी, हेटौंडा भई गोरखपुर पौष १३ गते पुगेको थियो। त्यहाँवाट फागुन २६ मा "कन्या दर्शन" गरी फागुन २८ गते कन्याहरूलाई लिई वाराणसीमा गएछन्। त्यहाँवाट चैत्र १२ गते गोरखपुर आई सिवान, भिखनाठोरी, चितलाङ भई चैत्र २९ गते काठमाडौं आएछन्। डोला खोज्न जाने टोलीमा लीलानाथ पाँडेसमेत भएको कुरा श्रीदिनेशराज पन्तले यस पुस्तकको पहिलो संस्करणमा प्रकाशित मन्तव्यमा लेख्नुभएको छ। डोला ल्याई

फर्केको दिन जनरल (भीमसेन थापा) सँग भेटेको कुरा पनि लेखिएको छ। डोला लिन जाने अन्य व्यक्ति काजी बहादुर भण्डारी, एकदेव वैद्य, धौकल सुब्बा, भण्डारी काजी प्रभुति थिए।

श्री ५ राजेन्द्रको व्रतबन्ध र विवाहको लागि सोह्र हातको मण्डप बन्यो। माघ २२ गते भण्डारखालबाट चोखोमाटो ल्याइयो। विवाह हुनुभन्दा अगाडि ९ वर्ष उमेर भएका राजेन्द्र आफ्नी बज्यै ललितत्रिपुरासुन्दरीको खोपीमा सुत्दथे। माघ २४ गतेपछि आफ्नै खोपीमा सुत्न थाले। माघ २४ गते श्री ५ राजेन्द्रको व्रतबन्ध हुँदा गायत्रीमन्त्र रंगनाथ पौडेलका छोरा जीवनाथ पौडेलले सुनाए।

माघ २५ गते हनूमान्ढोकाबाट राजाको जन्ती हनूमान्ढोका, टुँडिखेल हुँदै बालाजु पुग्यो। यसमा फिरङ्गी (ब्रिटिश रेसिडेन्सीका प्रतिनिधि) पनि थिए। उक्त विवाह हुँदा सुगौलीको सन्धि भएको आठ वर्ष जति मात्र भएको थियो। विवाहको जग्गे बालाजुको दरबारको दलानमा बनाइएको थियो।

माघ २५ गते श्रीपञ्चमीका दिन राजेन्द्रले एउटै जग्गेमा पहिले साम्राज्यलक्ष्मी र पछि राज्यलक्ष्मीसँग विवाह गरे। उनीहरूको कन्यादान कसले गर्‍यो भनी लेखिएको छैन। सायद डोलासँगै आउने दाजुहरूले गरे कि ? बालाजुमा तीन दिन बसेपछि साम्राज्यलक्ष्मी, राज्यलक्ष्मी र अन्त्यमा राजेन्द्रको पालकी लिएर जन्ती हिँडी हनूमान्ढोका आइपुग्यो। कान्छीमैयाँले आरती गरिन्। जिजुमुमा बडामहारानी ललितत्रिपुरासुन्दरी पर सरेकीले पाथी भर्ने काम पछि भयो। राजेन्द्रकी मुमा उनका पिता गीर्वाणलाई बिफर रोग लागेर भए जस्तै उनी एक वर्षका हुँदा स्वर्गारोहण भइसकेकी थिइन्। उनकी जिजुमुमा ललितत्रिपुरासुन्दरी मात्र बाँकी थिइन्। कान्छी मैयाँ भन्नाले राजेन्द्रकी कोही बहिनी पर्ने देखिन्छन्। वि.सं. १८७४ मा उनको जन्म भएको देखिन्छ। गीर्वाण र गोरक्षराज्यलक्ष्मीको स्वर्गवास वि.सं. १८७३ मार्गमा भइसकेकोले उनी राजेन्द्रकी आफ्नै बहिनी होइनन् होला।

राजेन्द्र र साम्राज्यलक्ष्मीका तीन छोरामध्ये सुरेन्द्रको जन्म वि.सं. १८८६ मा हुने बेलामा राजेन्द्रको उमेर १६ वर्ष र साम्राज्यलक्ष्मीको १४ वर्ष थियो। वि.सं. १८८८ मा माहिला साहेबज्यू उपेन्द्रको जन्म भएको थियो।

साम्राज्यलक्ष्मीबाटै कान्छा छोरा देवेन्द्रको जन्म वि.सं. १८९३ मा भएको र ६ महिनाको उमेरमा बाल्यावस्थामै निजको स्वर्गवास भएको थियो। भीमसेन थापाले यी बालकमाथि विष प्रयोग गर्‍यो भने आरोप पनि लगाइएको थियो। राज्यलक्ष्मीका दुई छोरामध्ये साहिँला साहेबज्यू रणेन्द्र र काहिँला साहेबज्यू वीरेन्द्र थिए। रणेन्द्रको जन्म वि.सं. १८८९ मा भएको थियो। रणेन्द्रको त कोतपर्व हुने बेलामा विवाह भइसकेको थियो।

राज्यलक्ष्मीको नाममा वि.सं. १८९९ (१७६४ शाके) र वि.सं. १९०१ (१७६६ शाके)

मा सुकीसमेत निस्क्यो। उनको नाममा मुद्रा निस्कने समयमा उनी शक्तिशाली भइसकेकी थिइन्। साम्राज्यलक्ष्मी जीवित छउन्जेलसम्म राज्यलक्ष्मीको नाममा मुद्रा निस्केको थिएन। नेपालको इतिहासमा रानीहरूमध्ये नरेन्द्रलक्ष्मी, राजेन्द्रलक्ष्मी, अमरराजेश्वरी, महामहेश्वरी, सुवर्णप्रभा, ललितत्रिपुरासुन्दरी, सिद्धिलक्ष्मी, गोरक्षराज्यलक्ष्मी, साम्राज्यलक्ष्मी, त्रैलोक्यराज्यलक्ष्मी, सुरराज्यलक्ष्मी, देवराज्यलक्ष्मी, पुण्यकुमारी, लक्ष्मीदिव्येश्वरी, रत्नराज्यलक्ष्मी र ऐश्वर्यराज्यलक्ष्मीका नाममा सुकी अथवा मोहरको सिक्का निस्केको छ।[३]

सन्दर्भ ग्रन्थ


*(१) दिनेशराज पन्त, राजज्योतिषी लीलानाथ पाँडे, पूर्णिमा, पूर्णाङ्क १४, पृ. १६२*

*(२) सुन्दरानन्द बाँडाको, त्रिरत्न सौन्दर्य गाथा, धनबज्र बज्राचार्य*

*(३) Raj, Prakash A., Queens of The Shah Dynasty in Nepal, Nabeen Publications 1997*




कान्छी महारानी राज्यलक्ष्मीकी बुढी सासु ललितत्रिपुरासुन्दरी

# जेठी महारानी साम्राज्यलक्ष्मी शक्तिशाली हुँदा
## (वि.सं. १८८८-१८९८)

श्री ५ राजेन्द्रका जेठा महारानी साम्राज्यलक्ष्मीको जन्म भारतको हाल उत्तर-प्रदेशको गोरखपुरको चिलवा भन्ने ठाउँमा वि.सं. १९७२ मा भएको थियो। उनको मातृभाषा अवधी थियो। उनको एकजना दाजु अथवा भाइको आगोमा जलेर अकाल मृत्यु भएको थियो।[1] वि.सं. १८८० मा मधेशबाट श्री ५ राजेन्द्रसँग विवाह यिनी काठमाडौंको राजदरबारमा आइपुगिन्। यिनकी सौता राज्यलक्ष्मी पनि यिनी जस्तै एउटै जग्गेमा श्री ५ राजेन्द्रसँग वि.सं. १८८० मा नै विवाह गरी काठमाडौंको राजदरवारमा प्रवेश गरिन्।

आफ्ना पिता गीर्वाणयुद्धको स्वर्गवास भएपछि तीन वर्षको उमेरमा राजेन्द्र राजा भएका थिए। त्यस बेला नेपालको शासन भीमसेन थापाले चलाई राखेका थिए। रणबहादुरकी रानी ललितत्रिपुरासुन्दरी राजेन्द्रकी बज्यै थिइन् र उनको संरक्षिका। राणाशासनकालमा राजपरिवारलाई निगरानीमा राखेजस्तै भीमसेन थापाले पनि आफ्ना भाइ रणवीरसिंह थापालाई राजदरबारमै राखेका थिए। ललितत्रिपुरासुन्दरीको बारेमा बाबुराम आचार्यले लेखेका छन्- "लालमोहरको छाप यिनकै जिम्मामा रहने गरेकोले भीमसेन थापाले लेखाएर ल्याएको लिखतहरूमा कुनै आनाकानी नगरी लालमोहरको छाप लगाइदिनु मात्र यिनको काम रहँदै आएको थियो।"[२]

साम्राज्यलक्ष्मी र राज्यलक्ष्मीको विवाह हुने बेलामा आठ र छ वर्षको मात्र उमेर भए तापनि दरबारमा हुँदा आफू नजरबन्दमा रहेको कुरा बिस्तारै बुझ्न थाले। राणाशासनकालको उत्तरार्धमा नारायणहिटी-

राजदरबारभन्दा सिंहदरबार भव्य र विशाल भएभैँ त्यसताका पनि हनूमान्ढोका राजदरबारभन्दा भीमसेन थापाको महल बागदरबार भव्य थियो

बाबुराम आचार्यको भनाइ अनुसार[३] दरबारमा धेरै केटीहरू काम गर्दथे। रजस्वला हुने बेलामा दरबारभित्र वसे भने दरवार विटुलिन्छ भन्ने धारणा भएकोले केही दिनसम्म दरवारवाट प्रतिमहिना वाहिर पठाइन्थ्यो। यिनै केटी सुसारेवाट रानीहरूले कसरी भीमसेन थापाले रणवहादुरकी रानी राजेन्द्रलक्ष्मी र राजेन्द्रकी आफ्नै जेठी आमा सिद्धिलक्ष्मी र अनेक अन्य आइमाईलाई सती पठाए र रणवहादुर शाहको वि.सं. १८६३ मा हत्या भएपछि कसरी ९३ जनाको ज्यान गयो[४] भन्ने कुरा थाहा पाए।

वि.सं. १८८८ मा जिजुमुमा वडामहारानी ललितत्रिपुरासुन्दरीको स्वर्गवास भयो र भीमसेन थापाले पच्चीस वर्षदेखिको आफ्नो संरक्षकलाई गुमाए। लालमोहरको छाप जेठी रानी साम्राज्यलक्ष्मीको हातमा आयो। यसवेला राजेन्द्रको उमेर १८ वर्षको र साम्राज्यलक्ष्मीको १६ वर्षको थियो।

वि.सं. १८९३ मा दामोदर पाँडेका छोरा रणजङ्ग पाँडे काजी बनाइए। वि.सं. १८६० मा राजा रणवहादुर शाह भीमसेन थापासँग वाराणसीको वसाइपछि काठमाडौं फर्कदा दामोदर पाँडे, उनका छोरा र उनका पक्षका अनेक भारादार काटिएका थिए। उनीहरूको सर्वस्वहरण पनि गरिएको थियो।

वि.सं. १८९४ मा साम्राज्यलक्ष्मीका कान्छा छोरा देवेन्द्रको ६ महिनाको उमेरमा देहान्त भयो, भीमसेन थापाले विष खुवाई राजकुमारलाई मार्न लगाए भन्ने आरोप लाग्यो। औषधि खुवाउने वैद्य भूपालमानको छाला काटी आँखा निकाली शूलीमा चढाइयो। भीमसेन थापालाई पक्रिएर जेलमा राखियो। त्यसपछि रणजङ्ग पाँडेलाई तीन महिनासम्म मुख्तियार वनाइयो। तर उनले राम्ररी काम चलाउन नसकेकोले वि.सं. १८९४ रङ्गनाथ पौडेललाई मुख्तियार वनाइयो। विषमुद्दामा भीमसेन थापाले सफाइ पाएपछि उनी गोरखा जिल्लाको वोर्लाङमा आफ्नो घरजग्गामा वस्न थाले। माथवरसिंह थापा भारततर्फ लागे।

वि.सं. १८९५ मा साम्राज्यलक्ष्मीले रणजङ्ग पाँडेलाई पुनः मुख्तियार नियुक्त गरिन्। यिनले सुगौलीको सन्धिवाट नेपालको गुमेको क्षेत्र फिर्ता लिने कोशिसमा भारतका देशी राज्यहरूसँग पत्रव्यवहार गरिन्। यो कुरा अंग्रेजहरूले थाहा पाएपछि सशंकित भए। अंग्रेजले नेपालको सिमानामा फौज राख्यो। यो समस्या समाधान भीमसेन थापाले गर्न सक्लान् भनी उनलाई फेरि काठमाडौं बोलाइयो। भीमसेन थापा फेरि शक्तिशाली हुन थाले।

साम्राज्यलक्ष्मीले फेरि भीमसेन थापाको विरुद्ध विषमुद्दा बिउँताउन लाइन्।

राजकुमार देवेन्द्रलाई औषधि खुवाउने वैद्यहरू फेरि कारागारमा राखिए। भीमसेन थापालाई फेरि नजरबन्द गरियो। भीमसेन थापाकी कान्छी पत्नीलाई पनि नजरबन्द गरी उनकै निवासस्थानमा राखिएको थियो। उनले साम्राज्यलक्ष्मीलाई गाली गरिन् भन्ने कुरा दरबारमा पनि पुग्यो। उनलाई पनि जेलमा पठाइयो।

अब उनको बेइज्जती गरिन्छ भन्ने हल्ला चलाइयो। यो कुरा भीमसेन थापाले पनि सुनेर वि.सं. १८९६ साउन ८ गते आत्महत्या गर्ने प्रयास गरे। राजा राजेन्द्र र साम्राज्यलक्ष्मीको हुकुमले उनको अर्धचेत शरीर विष्णुमतीको किनारामा फालियो र ९ दिनसम्म जीवित रही वि.सं. १८९६ साउन ३० गते उनको देहान्त भयो। उनको दाहसंस्कार पनि गर्न दिइएन र उनको लाश त्यहाँबाट हटाउन नदिई स्याल र कुकुरहरूले खाए।

भीमसेन थापाले आफ्नो शासनकालमा राजपरिवारका रानीहरू र सुसारेलाई समेत सती पठाएका थिए। रणबहादुर शाहका अनेक भारादारहरूको शव वि.सं. १८६३ मा अन्तिम संस्कारसमेत गर्न नदिई जसरी स्याल र गिद्धलाई लुछ्याउन लगाएका थिए, आखिरमा उनको आफ्नो पनि त्यही गति भयो।[५]

वि.सं. १८९६ चैतमा रणजङ्ग पाँडेले विष खाएर मर्नुपर्‍यो। त्यसपछि चौतरिया पुष्कर शाह मुख्तियार बनाइए। तिनी अंग्रेजविरोधी छन् भन्ने खबर अंग्रेजहरूकहाँ पुगेकोले र पर्सानिरको भारत-नेपाल सीमामा केही गडबड भएकोले अंग्रेजले कडा विरोध गरेर सीमामा सेना पठायो। मुख्तियार पद पुष्कर शाहबाट हटाई फत्यजङ्ग शाहलाई दिइयो।

साम्राज्यलक्ष्मीले राजा राजेन्द्रले पदत्याग गरी जेठा छोरा सुरेन्द्रलाई राजा बनाउन् भन्ने चाहेकी थिइन्। पुष्कर शाहलाई आफ्नो पदबाट हटाइएपछि वाराणसीतर्फ जान्छु भनी नेपाल भारत सीमातर्फ लागिन् र उनलाई फर्काउन राजेन्द्र पनि सँगै लागे। उनले फर्कन नमानेपछि राजेन्द्र काठमाडौँमा फर्के।

भारत जाने सिलसिलामा २६ वर्षको मात्र उमेर भएकी साम्राज्यलक्ष्मीको औलोको ज्वरले १८९८ असोज २० गते (१८९८ अधिक आश्विनवदी ६) मा स्वर्गवास भयो भनी एकजना इतिहासकारले लेखेका छन्।[६] बाबुराम आचार्यले भने यिनी हेटौँडाबाट काठमाडौँ फर्किन् र त्यहाँ औलो लागेकोले काठमाडौँ आएपछि उनको स्वर्गवास भयो भनी लेखेका छन्।[७]

साम्राज्यलक्ष्मीको अन्तिम समयमा विजयराज पनि त्यहीँ (हनूमान्ढोका अथवा हेटौँडा) थिए।[८] विजयराजले १८९८ आश्विन शुदि द्वितीयामा पुराण साङ्गे हुँदा जग्गा पाएको लालमोहर १८९८ मार्गशुदि ५ मा प्राप्त गरेका थिए र त्यसको नक्कल प्रकाशित भइसकेको छ।[९] विजयराजले त्यसबेला

आफ्ना पुर्खा गौरीश्वरले नरभूपाल शाहलाई मन्त्र सुनाई गुरु भएका थिए भन्ने कुरा साम्राज्यलक्ष्मीलाई पनि भनेका थिए।

सामाज्यलक्ष्मीले आफ्नो अन्तिम समयमा विजयराजलाई राज्यलक्ष्मीले आफ्नो छोरा रणेन्द्रलाई राजसिंहासनमा राख्न खोजि रहेको कुरा भनेकी थिइन्। आफू नवच्ने देखेर राजेन्द्रपछि आफ्नो छोरा सुरेन्द्रलाई नै गद्दीमा राख्ने कुरामा भरसक्दो मद्दत गर्नेछु भनी विजयराजले मृत्युशैय्यामा पुगेकी साम्राज्यलक्ष्मीलाई भनेका थिए। यो कुरा राज्यलक्ष्मीले थाहा पाइनन् होला।[१०]

## सन्दर्भ ग्रन्थ


(१) ज्ञानमणि नेपाल, **नेपालको महाभारत,** परिशिष्ट १, "युवराजाधिराजलाई मावलीको डढी मरेको वायुको दोष छ धामी लाउनुपर्छ" भनी श्री ५ राजेन्द्रले गोरखपुर बस्ने आफ्नो सासू (साम्राज्यलक्ष्मीकी मुमा) लाई १८९८ सालमा लेखेको पत्र

(२) बाबुराम आचार्य, **अब यस्तो कहिल्यै नहोस्,** प्रकाशक श्रीकृष्ण आचार्य २०५८, पृ. ५८

(३) पूर्ववत्, पृ. ५९

(४) ज्ञानमणि नेपाल, **नेपालको महाभारत,** साझा प्रकाशन, पृ. ७२

(५) बाबुराम आचार्य, **अब यस्तो कहिल्यै नहोस्,** प्रकाशक श्रीकृष्ण आचार्य, २०५८, पृ. ७०

(६) ज्ञानमणि नेपाल, पूर्ववत्, १३, पृ. १२५

(७) बाबुराम आचार्य, पूर्ववत्, पृ. २५

(८) लेखकले पारिवारिक स्रोतबाट सुनेको कुरा

(९) प्रकाश ए.राज, **विजयराज पण्डित**

(१०) लेखकको परिवारमा धेरै पहिलेदेखि सुनी आएको भनी पूर्वबडागुरुज्यू नयनराज पाण्डेबाट थाहा भएको

# कोतपर्वको तयारी (वि.सं. १८९८-१९०३)

वि.सं. १८९८ असोजमा जेठी महारानी साम्राज्यलक्ष्मीको स्वर्गवास भएपछि राज्यलक्ष्मी शक्तिशाली भइन् । उनले आफ्नो महत्त्वाकांक्षा पूरा गर्ने वातावरण बनाउने तयारी गर्न थालिन्, जुन थियो राजेन्द्रका जेठा छोरा युवराज सुरेन्द्र र उनका भाइ उपेन्द्रलाई हटाएर आफ्ना छोरा रणेन्द्रलाई उत्तराधिकारी बनाउने ।

साम्राज्यलक्ष्मीका समर्थक पाँडे भारादारहरू भएकोले उनले पाँडेहरूका शत्रु थापाहरूबाट आफ्नो इच्छा पूरा हुने देखिन् । त्यसबेला युवराज सुरेन्द्रले पनि अनेक उट्पट्यांङ्ग काम गर्न थाले । राजा राजेन्द्रलाई भाइभारादार, सन्त, महन्त र साधारण जनताले समेत सुरेन्द्रको स्वेच्छाचारिताको विरुद्ध उजुर गरे ।

राजेन्द्रले चौतरिया फत्यजङ्गको सल्लाहमुताबिक वि.सं. १८९९ पौष २३ मा प्रशासनसम्बन्धी सम्पूर्ण अधिकार कान्छी महारानी राज्यलक्ष्मीलाई दिए । त्यसताका मुख्तियार फत्यजङ्ग चौतरिया थिए । आफ्नो छोरा रणेन्द्रलाई उत्तराधिकारी बनाउने काम उनले फत्यजङ्गबाट हुने देखिनन् ।[1]

त्यस बेला माथवरसिंह थापा भारतको सिमलामा बस्दथे । उनलाई नेपाल बोलाउने निर्णय गरिएपछि उनलाई अभयदान दिई लालमोहर पनि पठाइयो । वि.सं. १९०० बैशाखमा उनी नेपाल आएपछि उनलाई मुख्तियारको पद दिइयो । सबभन्दा पहिले उनले भारादारीसभाको बैठक बोलाउन लगाए र भीमसेन थापालाई लगाएको विष मुद्दामा उनलाई मृत्युपछि सफाइ मिल्यो ।

माथवरसिंह थापाले पागल भइसकेका रणजङ्ग पाँडेलाई विषपान गराई मराए ।[2] माथरसिंह थापा लोकप्रिय र शक्तिशाली हुँदै गए । कान्छी महारानी राज्यलक्ष्मीले माथवरसिंहको सहायता लिई आफ्ना छोरालाई राजगद्दीमा राख्ने योजना बनाएकी थिइन् । सो काम गर्न माथवरसिंहले मानेनन् ।

माथवरसिंह अति शक्तिशाली भएको कुरा राजा राजेन्द्रलाई पनि मन परेको थिएन। वि.सं. १९०२ जेठ ६ गते राती ११ बजे राज्यलक्ष्मीलाई शूल भई बिरामी भइन् भनी हनूमान्ढोकाबाट माथवरसिंह बोलाइए। बागदरबारबाट त्यहाँ पुग्नासाथ पर्दामा लुकिराखेका आफ्नै साख्खै भानिज जङ्गबहादुरको गोलीप्रहारबाट माथवरसिंहको देहान्त भयो।

वास्तवमा माथवरसिंहको हत्या गराउने राजा राजेन्द्र र महारानी राज्यलक्ष्मी थिए। माथवरसिंहको लाश डोरीले बाँधी सडकमा खसालियो।[३] राजेन्द्रले पछि आफूले नै माथवरसिंहको हत्या गरेको कुरा स्वीकार गरे। दुई वर्षपछि मात्र जङ्गबहादुरले सो हत्या गरेको भन्ने कुरा सबैले थाहा पाए। ■

**सन्दर्भ ग्रन्थ**

(१) *बाबुराम आचार्य, अब यस्तो कहिल्यै नहोस्, पृ. ७८*
(२) *बाबुराम आचार्य, पूर्ववत्, पृ. ८०*
(३) *ज्ञानमणि नेपाल, नेपालको महाभारत, पृ. २०९*



**जङ्गबहादुर कुँवर राणा**

# कोतपर्व (वि.सं. १९०३ भदौ)

वि.सं. १९०३ (सन् १८४६) को सोह्रश्राद्धको बेला थियो, दशैंको टीका आउन अझै पन्ध्र दिन बाँकी थियो । भदौको ३१ गते मसान्तको दिन हुनाले मनसुन अझै सेलाइसकेको थिएन । त्यसताका गगनसिंह भण्डारी अति शक्तिशाली भारदार थिए र कान्छी महारानी राज्यलक्ष्मी पक्षधर र मन परेका थिए । १९०३ सालमा जङ्गी र खरखजाना उनकै हातमा थियो ।[1] हुन त त्यसबेला प्रधानमन्त्री फत्यजङ्ग शाह ( चौतरिया) भएका थिए र जङ्गबहादुर पनि जनरल भई शक्तिशाली भएका थिए, गगनसिंह यी दुवैभन्दा बढी महत्त्वपूर्ण व्यक्ति भइसकेका थिए ।

गगनसिंहको घर थियो यट्खाटोलबाट कंकेश्वरी जाने बाटोमा । विष्णुमती नदीको किनारामा रहेको कंकेश्वरी भगवतीको मन्दिर र श्मशान नजिक रहेको छ । गगनसिंहको घरबाट कंकेश्वरी पुग्न दुइ मिनेटको बाटो होला । जाने बाटोमा खड्गी (कसाई) हरूको घना बस्ती छ । कंकेश्वरीको मन्दिरमा गगनसिंह र जङ्गबहादुरले बाचा बाँधेका थिए जुन वि.सं. १९०३ तिरै हुनुपर्दछ ।[2] त्यो मन्दिर अझै पनि छ । वि.सं. १९४४ मा त्यो घर वीरशमसेरले विजयराजका नाति लोकराजलाई दिएका थिए । लोकराजका नाति विश्वराजको भागमा परेकामध्ये सो घर उनका पुत्र विधिराजको भागमा परेको थियो । यही घरको पूजाकोठामा पूजा गरिरहेका गगनसिंहलाई भदौ ३१ गते राती १० बजेतिर आँखीझ्यालबाट गोली हानी कसैले हत्या गरिदियो ।[3]

उक्त घरको माथिल्लो तलामा जाने भऱ्याङमा वि.सं. २०१० सम्म पनि राती भूतले तर्साउँछ भनी मैले पनि बूढापाकाहरूले भनेको सुनेको थिएँ । भऱ्याङमा हिँड्ने व्यक्तिको आवाज सुनिने गगनसिंहकै हो भन्दथे । वि.सं. १९४४ मै आफूले घर पाएपछि नातिगुरुज्यू लोकराजले धेरै तर्सायो भनेर गगनसिंहको हत्या भएको माथिल्लो तलाको पूजाकोठा नै भत्काएर त्यहाँ सप्ताह लगाएर त्यस तल्लाको ईंटसमेत विष्णुमतीमा सेलाउन पठाएका थिए । त्यसपछि पनि तर्साउने भइरहेको थियो भन्ने सुनेको थिएँ ।

गगनसिंहको घरबाट हनूमान्ढोका राजदरबारमा पुग्न पाँच मिनेट पनि लाग्दैन। गगनसिंहका छोरा वजीरसिंहले हत्या भएको कुरा तुरुन्त हनूमान्ढोकादरबारमा गई कान्छी महारानी राज्यलक्ष्मीलाई बताए। त्यसताका काठमाडौँमा बिजुली बत्ती आइसकेको थिएन, कृष्णपक्षको नवमीको दिन हुनाले जून पनि थिएन होला। बर्षाको समय हुनाले बादलले गर्दा पनि अँध्यारो थियो होला।

राज्यलक्ष्मी १०/१२ सुसारेहरूलाई साथमा नाङ्गो तरवार लिई चिराग बाल्न लगाई हिँडेर गगनसिंहको घरमा गईन्। घरमा रुवावासी मच्चिइरहेको थियो। त्यहाँ गगनसिंहका तीनवटी पत्नीलाई सान्त्वना दिई सती जानबाट रोकिन्।[४] उनले गगनसिंहको लाश दाहसंस्कारको निमित्त आर्यघाटतर्फ पठाउन लगाई त्यस कामको लागि रु. एक लाखको निकासा दिइन् र गगनसिंहको हत्याको बदला लिने प्रण गरिन्। वाबुराम आचार्यले महारानीले गगनसिंहको हत्याराको पत्ता नलागुन्जेलसम्म लासलाई नजलाउनु भनी भनेको कुरा लेखेका छन्।[५]

हनूमान्ढोका राजदरबारमा पुगेपछि उर्दीको बिगुल बजाउन आदेश दिइन्। भारादारहरू धमाधम भेला हुन थाले। जङ्गबहादुरले त्यस बेला आफ्नो मातहतमा रहेका ५०० सेना र आफ्ना ६ जना भाइहरू (बमबहादुर, बद्रीनरसिंह, कृष्णबहादुर, रणोद्दीपसिंह, जगत्शमसेर र धीरशमसेर) लाई कोतको आसपासमा राखे। वरिपरी सेनाले घेर्न लगाए। कंपुकोत भनेको हनूमान्ढोकाराजदरबारबाट पश्चिमतर्फ रहेको छ र हाल त्यहाँ शाही सेनाको ब्यारेक रहेको छ।

वि.सं. १९४३ तिर मात्र राजदरबार हनूमान्ढोकाबाट नारायणहिटीमा हालको दरबार भएको ठाउँमा सरेको हो र त्यसअघि कोतपर्वको समयमा कोत सैनिक दृष्टिले अति महत्त्वपूर्ण ठाउँ हुँदो हो। केहीबेरपछि मध्य रातीमा धेरैजसो भारादार जम्मा भए। कोतमै महारानी आएर म गगनसिंहको हत्याराको पत्ता लगाई छोड्छु भनी कराउन थालिन्। त्यसवेला वीरकेशर पाँडे सुरेन्द्रका विशेष सेवक थिए।

गगनसिंहको हत्या उनले गरेको हो कि भनेर उनलाई कोर्राले हानी केरकार गर्ने व्यवस्था हुँदै थियो। त्यसवेला अभिमानसिंह राना २०० सैनिक लिई हनूमान्ढोका आइपुगे। राजा राजेन्द्र पनि तल ओर्ले। महारानीले आफ्नो रौद्ररूप देखाइरहेकी थिइन्। महारानीले वीरकेशर पाँडेलाई देखाई अभिमानसिंह रानालाई भनिन्- "यसैले गगनसिंहको हत्या गरेको हो, यसलाई काट्।"

राजेन्द्र भने प्रधानमन्त्री फत्यजङ्ग चौतरिया त्यहाँ नभएकोले तुरुन्त मृत्युदण्ड दिनु हुँदैन भनी आफैं फत्यजङ्गलाई लिन उनको घर भएको ठाउँ हालको नारायणहिटीतर्फ गए। राजेन्द्र राती १२ बजे फत्यजङ्गको घरमा पुगे। फत्यजङ्गले आफू कोतमा जानुभन्दा अघि[६] अंग्रेजी राजदूतलाई लिई कोतमा जानु राम्रो होला भन्ने सल्लाह दिए। राजेन्द्र फत्यजङ्गलाई कोततर्फ जाँदै गर्नु म राजदूतलाई लिएर आउँछु भनी लैनचौरतर्फ लागे।

लैनचौरमा अंग्रेजका कार्यवाहक राजदूतले राजेन्द्रलाई भेटै दिएनन् र उनी हनूमान्ढोका फर्के। त्यसबेला राती डेढ बजेको थियो। महारानी उनको प्रतीक्षा गरिरहेकी थिइन्। वीरकेशरलाई महारानी आफैले काट्न तयार भइन्। त्यहीबेला तीन गोली आएर फत्यजङ्ग चौतरिया र दलमञ्जन पाँडेलाई लाग्यो र दुवैको तत्काल मृत्यु भयो। तेस्रो गोली अभिमानसिंह रानाको खुट्टामा लाग्यो। तिनवटै गोली जङ्गबहादुरको सिपाहीले हानेका थिए भन्ने बाबुराम आचार्यको भनाइ छ।

अभिमानसिंह राना कोतबाहिर रहेको आफूसाथ ल्याएको सेना कहाँ जान लागेका थिए तर त्यही बेलामा जङ्गबहादुरको इशारामा एकजनाले उनलाई संगीनले हान्यो। मर्नुभन्दा अघि उनले "गगनसिंहलाई मार्ने जङ्गे हो" भने। त्यसपछि कोतभित्र जम्मा भएका भारादारहरूको आमहत्या शुरू भयो।

कोतपर्वमा हत्याकाण्ड शुरू भएको बेलामा लैनमा कार्यवाहक राजदूतले भेट नदिएपछि राजेन्द्र फर्केर हनूमान्ढोका पुगेपछि कोतको ढोकामा पुगी भित्र पस्न खोजे। ढोकामा विजयराज उभिइराखेका रहेछन्। उनले राजेन्द्रलाई कोतमा भीषण हत्याकाण्ड भइरहेको छ सवारी हुनु हुँदैन भनी जान रोके। राजेन्द्र तैपनि भित्र जान खोज्दा विजयराजले आफू सुतेर बाटो रोकिदिए। बाहुनलाई नाघेर भित्र जान नहुने हुनाले राजेन्द्र हनूमान्ढोका दरबार फर्के।

विजयराजले राजेन्द्रलाई कोतभित्र जान रोके भनी बाबुराम आचार्यले पनि लेखेका छन्।[७] कोतपर्वमा तात्कालिक प्रधानमन्त्रीलगायत काजी सरदारसमेत गरी ३२ जना मारिए, ३ जना मुडिए, ५ जना सपरिवार र २१ जना एक्लै निकालिए र २७ जना मारिए।[८] कोतको हत्याकाण्डमा मरेका भारादारहरूको लाश सुरेन्द्र र उपेन्द्रलाई देखाउनु भनी राज्यलक्ष्मीले जङ्गबहादुरलाई आदेश दिइन्।

कोतपर्व भएको भोलिपल्ट वि.सं. १९०३ असोज १ गते महारानी राज्यलक्ष्मीबाट जङ्गबहादुरले प्रधानसेनापतिको पद प्राप्त गरे। जङ्गबहादुरले बीस असर्फी राखी रानीको अभिवादन गरे। त्यसपछि जङ्गबहादुर राजा राजेन्द्रको दर्शन गर्न गए। राजेन्द्रले "कसको हुकुमले यति धेरै भारादारहरू मारेको" भनी प्रश्न गर्दा "महारानीले राजाबाटै हुकुम चलाउने अधिकार पाएकोले" भनेका थिए। कोतपर्वमा राजेन्द्रको पक्षका सबैजसो भारदारहरू कि त मारिए, निर्वासित गरिए अथवा भागे। नेपालमा १०४ वर्षको राणाशासन यसै पर्वपछि शुरू भएको थियो।

## गगनसिंहको हत्या कसले गरेको थियो?

गगनसिंह कुनै बेला राजा राजेन्द्रका ददा थिए। उनको हत्या लाल झा भन्ने एक बदमासले गरेको थियो। अझै पनि तात्कालिक गगनसिंहको घरबाट कंकेश्वरी जाने बाटोको दक्षिणतर्फको गल्लीमा लाल झाको घरमा उनका वंशजहरू बस्छन्। कसैले जङ्गबहादुरको इशाराले गगनसिंहको हत्या भएको थियो पनि भनेका छन्। गगनसिंहले नै लाल झालाई राज्यलक्ष्मीका छोरा रणेन्द्रको सेवामा लगाई दिएका थिए।[१०] जङ्गबहादुरका भाइ बद्रीनरसिंह बराबर

गगनसिंहको घरमा गइराख्ने हुनाले उनले नै पो गगनसिंहलाई मारे कि भनी कतिले शंका गरे ।

ज्ञानमणि नेपालको भनाइअनुसार गगनसिंहलाई कुनै उपायले पन्छाउनुपर्ने कुरामा तात्कालिक मन्त्रिमण्डलको रायमा राजा राजेन्द्रले पनि सहमति दिए र गगनसिंहकै मानिस लाल झालाई तीनहजार असर्फी दिने प्रलोभनमा गगनसिंहको हत्या गराइयो ।[११]

भण्डारखालपर्वपछि वाराणसीमा राज्यलक्ष्मीसँगै गएका राजेन्द्र नेपाल फर्कन्छु भनी नेपालको सीमातर्फ जाँदा सुगौलीबाट वि.सं. १९०४ जेष्ठवदि ५[१२] मा राजेन्द्रलाई लेखेको पत्रमा राज्यलक्ष्मीले आफूले चारजनालाई मात्र काट्नु अथवा अन्य सजाय दिनु भनी भनेको कुरा स्वीकार गरेकी छन् । जङ्गबहादुर र विजयराजले झुक्याएर कोतपर्व गराएको थिए पनि भनेकी छन् ।

वास्तवमा कोतपर्वपछि कसको हुकुमले यतिका मानिस मारिए भनी राजेन्द्रले प्रश्न गर्दा जङ्गबहादुरको स्पष्टीकरणपछि राज्यलक्ष्मीले "आफ्ना छोरा रणेन्द्रलाई राजा नबनाए अरू हत्याकाण्ड पनि हुन्छ" भनेपछि राजा राजेन्द्र वाराणसी जान्छु भनी सरदार भवानीसिंहसित हिँडेका थिए । राज्यलक्ष्मीले मानिस पठाएर भवानीसिंहलाई मार्न लगाइन् ।[१३]

कोतपर्व हुनाको मुख्य कारण राज्यलक्ष्मीले राजा राजेन्द्र र उनका जेठा छोरा युवराज सुरेन्द्रलाई हटाई रणेन्द्रलाई राजसिंहासनमा राख्न खोज्नाले भएको हो । आफ्नो हुकुमको अधिकारसमेत राज्यलक्ष्मीलाई सुम्पिदिने, कोतपर्व भएको राती पनि राजा भएर प्रधानमन्त्रीको घरमा उनलाई बोलाउन आफैं जाने र अंग्रेज कार्यवाहक राजदूत कहाँ राती आफैं जाने जस्ता राजेन्द्रको कमजोरीले पनि कोतपर्व हुन गयो । जङ्गबहादुरले मौकाको फाइदा लिएकै हुन् । ▪

**सन्दर्भ ग्रन्थ**


*(१) बाबुराम आचार्य, **अब यस्तो कहिल्यै नहोस्***

*(२) ज्ञानमणि नेपाल, **नेपालको महाभारत**, पृ. ३४८*

*(३) पुरुषोत्तम शम्शेर ज.ब.रा., **श्री ३ हरूको तथ्य वृत्तान्त**, विद्यार्थी पुस्तक भण्डार, २०५९*

*(४) पुरुषोत्तम शम्शेर, जबरा, पूर्ववत् पृ. २७*

*(५) बाबुराम आचार्य, पूर्ववत्, पृ. ९७*

*(६) बाबुराम आचार्य, पूर्ववत् १०१*

*(७) बाबुराम आचार्य, पूर्ववत् पृ. १०१*

*(८) पुरुषोत्तम शम्शेर जबरा, पूर्ववत् पृ. ३२-३४*

*(९) पुरुषोत्तम शम्शेर जबरा, **श्री ३ हरूको तथ्य वृत्तान्त**, पृ. २०*

*(१०) बाबुराम आचार्य, पूर्ववत्, पृ. ९४*

*(११) ज्ञानमणि नेपाल, पूर्ववत् पृ. २६६*

*(१२) पूर्ववत्, पृ. ३१५*

*(१३) पूर्ववत् पृ. २७०*

# भण्डारखालपर्व (वि.सं. १९०३ कार्तिक)

कोतपर्व भएको डेढ महिना जति भएको थियो। दशैंको अगाडि नै भएको पजनीमा जङ्गबहादुरले आफ्ना भाइहरू तथा अन्य आफ्ना मानिसहरूको पदोन्नति गराइसकेका थिए। महारानी राज्यलक्ष्मीले सुरेन्द्र र उपेन्द्रको हत्या गरेर आफ्ना छोरा रणेन्द्रलाई उत्तराधिकारी बनाउन दबाब दिइराखेकी थिइन्। जङ्गबहादुरले यसो गर्न आनाकानी गरिरहेका थिए।

दशैं सकिएपछि राज्यलक्ष्मीले जङ्गबहादुरलाई एक पत्र पठाई सुरेन्द्र र उपेन्द्रलाई पन्छाई रणेन्द्रलाई गद्दीमा राख्ने काम गर भनी पत्र पठाएको कुरा पुरुषोत्तम शम्शेरले लखेका छन्।[1] जङ्गबहादुरले यस पत्रको उत्तरमा यो काम गर्न आफ्नो असमर्थता प्रकट गरे। त्यसपछि राज्यलक्ष्मीले जङ्गबहादुरलाई नै खत्तम गर्ने अठोट गरिन्।

वि.सं. १९९० को भूकम्प हुनुभन्दा अगाडि भूगोलपार्क हालको विशालबजार र नेपाल बैंकको केन्द्रीय अफिस पनि हनूमान्ढोका राजदरबारभित्रै पर्दथे। यस ठाउँलाई भण्डारखाल भनिन्थ्यो। राज्यलक्ष्मीले यसै ठाउँमा जङ्गबहादुर र उनका भाइहरूलाई खान बोलाउने र त्यहीँ हत्या गर्ने षड्यन्त्र गरिन्। सो काम वि.सं. १९०३ कार्तिक १७ गर्ने निर्णय भयो। यस षड्यन्त्रमा धेरैजना बस्नेतहरू सम्मिलित थिए। वीरध्वज बस्नेतलाई प्रधानमन्त्रीको पद दिइने भएको थियो।

गगनसिंह भण्डारीका छोरा उजीरसिंह भण्डारी पनि यसमा सम्मिलित भए। अर्का सम्मिलित गराइएका व्यक्ति थिए विजयराज, जसले कोतपर्वको मारकाट भइरहेको बेलामा राजेन्द्रलाई कोतभित्र जान रोकेका थिए। यस पर्वका प्रमुख पात्रमध्ये एक विजयराज पनि थिए। उनी को थिए र भण्डारखालपर्वमा के भूमिका खेले भनी बुझ्न उनको पृष्ठभूमि जान्न आवश्यक छ।

विजयराजका जिजुबराज्यू गौरीश्वरले राजा नरभूपाल शाहलाई मन्त्र सुनाएका थिए।[2] पृथ्वीनारायण शाहको पालामा गुरु बन्ने मौका यिनलाई अथवा यिनका

सन्तानलाई मिलेन । गौरीश्वरका केही सन्तान गोरखा र नेपालको राजदरबारमा थिए । यही वंशका प्रसिद्ध विद्वान् वाणीविलासलाई धर्माधिकारको पदवी मिलेको थियो ।[३] उनी गौरीश्वरका पनाति थिए । दिनेशराज पन्तको भनाइअनुसार "नरभूपाल शाहले गराएको पुरश्चरण सफल पार्न खटेर होस् वा गोरखालीहरूले चलाएको युद्धमा लडेर होस् गौरीश्वरका छोरा नातिहरूले नेपालको एकीकरणमा निकै काम गरे ।"[४] विजयराजको गौरीश्वरसँग सम्बन्धबारे बाबुराम आचार्यले उल्लेख नै गरेका छैनन् ।

१९३८ सालको पर्वमा परी निर्वासित गरिएका सुब्बा होमनाथका वंशज रामजी उपाध्यायले नेपालको इतिहासको पुस्तक लेख्दा विजयराजलाई "अज्ञातकुलशील" भनी लेखेका छन् । होमनाथको वलेट महाराज त्रैलोक्यको बेलामा दरबारसँग निकट भएर वसेका हुनाले पनि विजयराज कुन वंशका थिए भनी थाहा भई भईकन पनि नलेखेका हुन् ।

भण्डारखालपर्व भएको ८ दिनपछि विजयराजलाई १९०३ मार्गवदि ५ मा राजेन्द्रले गरिदिएको लालमोहरमा "तिमीहरूका घराना हाम्रा दरवारका अधिका पनि गुरु हौ" भन्ने कुरा उल्लेख भएकोले उनी राजदरबारसँग पहिलेदेखि सम्बद्ध व्यक्ति देखिन्छन् ।[५]

महारानी राज्यलक्ष्मीले जङ्गबहादुरलाई बोलाउन विजयराजलाई नै पठाइन् । त्यसबेला जङ्गबहादुर आफ्ना भाइ बमबहादुरको घर लगनमा बसेका थिए । एकजना इतिहासकारले जङ्गबहादुरले विजयराजसँग भेट गर्नासाथ डराएर षड्यन्त्रको कुरा बताउन थाले भनी लेखेका छन् ।[६] विजयराजले षड्यन्त्र हुन लागेको कुरा जङ्गबहादुरलाई भनिदिए । यसबाट सुरेन्द्र, उपेन्द्र, जङ्गबहादुर र सायद राजेन्द्रकै पनि ज्यान बच्यो भन्ने कुरा ऐतिहासिक तथ्य हो । बोलाउन गएका विजयराज फर्केर आउन अबेर गरेकाले महारानी राज्यलक्ष्मीले काजी वीरध्वज बस्नेतलाई नै जङ्गबहादुरकहाँ पठाईन् । त्यस बेलासम्म जङ्गबहादुर सशस्त्र फौज लिई हनूमान्ढोका राजदरबारतर्फ हिँडिसकेका थिए । बाटोमा वीरध्वज बस्नेतको जङ्गबहादुर र उनका भाइहरूसँग भेट भयो ।

वीरध्वजले जङ्गबहादुरसँग कुरा गर्न खोजे । उनीसँग भेटेपछि महारानीले बोलाएको कुरा भने । जङ्गबहादुरले- "तिमी आफैं प्रधानमन्त्री भइसकेपछि मैले किन जानुपर्‍यो ?" भनी भने । जङ्गले संकेत दिएपछि रणमेहर अधिकारीले वीरध्वजलाई गर्दन काटी मारे । राजेन्द्रले १९०४ वैशाखवदि १४ मा सुगौलीबाट विजयराजलाई लेखेको पत्रमा "विरध्वज चाँडाल्या बस्नात्याले गाथसंबन्धिको कुरा गर्दा उसमेत बाह्रजना मेरा हुकुमले काटिया" भनेर किन भने भन्ने प्रश्नको उत्तर अझ भेटिएको छैन ।

वि.सं. १९०३ कार्तिक १७ गते जङ्गबहादुरले भण्डारखालमा हमला गर्दा १३ जना मारिए र १७ जना भागे । महारानी राज्यलक्ष्मीलाई राजदरबारबाट मखनटोलमा नजरबन्द गरियो । महारानी आफ्ना दुईजना छोरासाथ लिई वाराणसी जाने भइन् । उनको साथमा राजेन्द्र पनि जाने भए ।

बाबुराम आचार्यले यस पर्वपछि विजयराजले राजगुरु र यिनका दाजु तीर्थराजले राजपुरोहितको पद पाएको कुरा लेखेका छन्।[७] तीर्थराज विजयराजका दाजु थिएनन्, काकाका छोरा भाइ थिए।[८] तीर्थराज राजपुरोहित १९०३ सालमा भएका थिएनन्, १९०५ सालसम्म पनि पुरोहित अर्जेल थिए। १९०५ र १९१० को बीच कुनै बेला तीर्थराजले सो पदवी प्राप्त गरेका थिए।[९] इतिहास शिरोमणि बाबुराम आचार्यले लेखेको कुरा पनि कहिलेकाहीं बेठीक हुँदो रहेछ। ■

**सन्दर्भ ग्रन्थ**


*(१) पुरुषोत्तम शम्शेर राणा, श्री ३ हरूको तथ्य वृत्तान्त, पृ. ३९*

*(२) बाबुराम आचार्य, श्री ५ पृथ्वीनारायण शाहको जीवनी, पृ. १९५*

*(३) ज्ञानमणि नेपाल, नेपालको महाभारत, पृ. ६५*

*(४) दिनेशराज पन्त, बडागुरुज्यू विजयराजको जन्ममिति र मृत्युमितिको विषयमा, ऋतंभरा, वर्ष २, अंक ८, २०५८ विजयादशमी*

*(५) प्रकाश ए.राज, विजयराज पण्डित, पृ. ४६*

*(६) पुरुषोत्तम शम्सेर राणा, पूर्ववत्, पृ. ४१*

*(७) बाबुराम आचार्य, अब यस्तो कहिल्यै नहोस्, पृ. ११५*

*(८) प्रकाश ए.राज, विजयराज पण्डित, पृ. ४८*

*(९) प्रकाश ए. राज, प्राचीन नेपाल, २०५७ असार*




विजयराज

# वाराणसीमा निर्वासन - राजा राजेन्द्र राज्यलक्ष्मीसँगै जान्छन् (वि.सं. १९०३ मंसिर)

वि.सं. १९०३ कार्तिकको भण्डारखालपर्वमा आफ्नो रणनीति असफल भएपछि र सम्पूर्ण सत्ताबाट पदच्युत गरिएपछि "तीर्थयात्रा" गर्न भनी राज्यलक्ष्मी वाराणसी जाने भइन्। राजेन्द्र पनि तीर्थयात्रा गर्न राजलक्ष्मीसँगै जान तत्पर भए। वाराणसी जानुभन्दा अगाडि नै उनी हनूमानढोका राजदरबारबाट निस्किएर मखनटोलमा तात्कालि माहिला गुरुज्यू (त्यसबेला गुरुज्यू पौडेल थिए) को घरमा बसिन्।

जङ्गबहादुरले रणेन्द्र र वीरेन्द्रलाई राज्यलक्ष्मीसँग बनारस नगएपनि हुन्छ, नेपालमा नै राजकुमारले पाउने सम्मान पाइनेछ भन्दाभन्दै पनि जान मन गरे। राजा राजेन्द्रले आफू पनि वाराणसी जाने इच्छा प्रकट गरे। उनको भनाइ थियो "मेरो कारणले कति जनाको हत्या भयो मेरा प्रजाले कति दुःख पाए। कुनै पनि राजाको भाग्य प्रजाको भाग्यसँग गाँसिएको हुन्छ। म पनि वाराणसीमा गई गंगाजीमा नुहाउन जान्छु।"[1]

जङ्गबहादुरले यति कुख्यात रानीसँग जान ठीक हुँदैन भन्दाभन्दै पनि राजेन्द्रले आफू नगई छाड्दिनँ भन्न लागे। वि.सं. १९०३ मंसीरको पहिलो हप्तामा राजा राजेन्द्र र राज्यलक्ष्मीको पार्टी वाराणसीतर्फ लाग्यो। युवराजाधिराज सुरेन्द्र (जसले नानी महाराजाधिराजको पदवी पाइसकेका थिए) लाई नायबी दिइयो।

पद्मजङ्गले महारानीलाई ३१ लाख रुपैयाँ र १५ लाख रुपैयाँ पर्ने जवाहरात दिइयो भनी लेखेका छन्। उनको भनाइ अनुसार जवाहरात र १३ लाख रुपैयाँ रानीको आफ्नै ढुकुटीबाट आएको थियो र १८ लाख रुपैयाँ सरकारी ढुकुटीबाट दिइएको थियो। वि.सं. २०१२/१३ सम्म पनि तराईबाट आउने सरकारी आम्दानी भारतीय मुद्रामा

आउँथ्यो जसलाई कंरु अथवा ईस्ट इन्डिया कम्पनीको नाममा कम्पनी रुपैयाँ भनिन्थ्यो।

सायद त्यही पैसा यस पार्टीलाई दिइएको थियो। त्यसताका जवाहरात, चाँदी र सुनको मुद्रामा सबै पैसा लगिएको थियो होला। काठमाडौँबाट भारतको सीमासम्म राजकीय पार्टीलाई पुऱ्याउन चारजना जङ्गबहादुरका विश्वासिला भारादार साथै शाही सेनाको टोली पठाइयो।[२] इतिहासकार रामजी उपाध्यायले राज्यलक्ष्मी र उनका दुई जना राजकुमारहरूले ५२ लाख रुपैयाँ सरकारी ढुकुटीबाट लगेको कुरा लेखेको छन्।[३]

वाराणसीमा राजा राजेन्द्र असीमा बसेका थिए भन्ने कुरा उनले त्यहाँबाट वि.सं. १९०३ माघमा लेखेको पत्रमा उल्लेख गरिएको छ। असी भनेको वाराणसीको सबभन्दा दक्षिणमा रहेको घाट हो। वास्तवमा वाराणसी भनेको वरुणा र असी नदीको बीचमा रहेको शहर भनी नामकरण भएको हो। वि.सं. १९०३ तिर शहरको केन्द्रभन्दा टाढा भएकोले, त्यतातिर घोडा, बग्गी र पाल राख्न खाली जग्गा धेरै थियो।

वाराणसीमा राजा राजेन्द्रको नेपालबाट निर्वासित गरिएका अनेक भारादारहरूसँग भेटघाट भयो। यीमध्ये चौतरिया गुरुप्रसाद शाह, काजी जगाराम पाण्डे र गुरुज्यू रङ्गनाथ पौडेल पनि थिए। यी सबैले राजेन्द्रलाई नेपाल गएर जङ्गबहादुरलाई पदच्युत गर्नुपर्ने कुरा गर्न लागे।

रणबहादुर शाह पनि छपन्न वर्ष अगाडि यसैगरी वाराणसीमा बसिसकेपछि नेपाल फर्केर आफ्नो गुमेको राजसत्ता फेरि भेट्टाएका थिए। यस कामको निमित्त राजेन्द्रले आफूले लगेको पैसामध्ये २३ लाख रुपैयाँ खर्च गर्न दिए। दुईहजार सेनाको पल्टन जम्मा गर्न यिनले जसलाई पैसा दिएका थिए तिनले तीन चार लाख रुपैयाँ मात्र खर्च गरेर बाँकी आफैं हडप गरे भनी पद्मजङ्गले लेखेका छन्।[५]

वाराणसीबाट काठमाडौँतर्फ राजेन्द्र वि.सं. १९०३ फागुनतिर हिँडेको देखिन्छ।[६] पद्मजङ्गको भनाइअनुसार जङ्गबहादुरले राजेन्द्रलाई चाँडै फर्किन पत्र लेखेका थिए तर राजेन्द्रले रानीसँग फर्कन पाए मात्र फर्कन मान्ने भनी लेखे। यस कुरालाई जङ्गबहादुर मान्न तयार थिएनन्। वास्तविकता यसबाट फरक देखिन्छ भन्ने कुरा राजेन्द्रले वाराणसी र नेपाल जाने बाटोबाट विजयराजलाई लेखेका चार पत्रबाट स्पष्ट हुन्छ।[७]

१९०३ माघशुदि ३ मा राजेन्द्रले विजयराजलाई लेखेको पत्रमा आफू २०/२५ दिन वाराणसी बसी नेपाल आउने कुरा लेखेका छन्। जङ्गबहादुरका भाइ बद्रीनरसिंह र विजयराजलाई समेत लिन आउन लेखेका छन्। यसैपत्रमा उनले नानी महाराजाधिराज (सुरेन्द्र) को गाथको सम्भार गर्नु भनी समेत लेखेका छन्। यसैगरी वि.सं. १९०३ चैत्रवदि ४ मा गाजीपुरबाट उत्तरतर्फ रहेको दरौलीबाट लेखेको पत्रमा समेत नानी महाराजाधिराजको गाथको सम्भार गर्न र उनकै हुकुमबमोजिम काम गर्न लेखेका छन्।

## राजेन्द्रको तेस्रो विवाहको कुरा

वि.सं. १९०४ वैशाखमा राजेन्द्रले सुगौलीबाट लेखेको पत्रमा "मेरो विवाहको उद्योग हवस्" भनी लेखेकाले उनको तेस्रो विवाहको पनि कुरा चलेको देखिन्छ। राज्यलक्ष्मीसँगै नेपाल फर्कने इच्छा भए त्यस्तो पत्र किन लेख्दथे। बनारसबाट नेपाल फर्कने बेलामा सेना जम्मा गरी राजेन्द्रले जङ्गबहादुरलाई हटाउन कोशिस नगरेको भए र नेपाल फर्की अर्को विवाह गरेको भए उनको हातबाट सत्ता पनि जाँदैनथ्यो होला र जङ्गबहादुर पनि त्यति शक्तिशाली हुन पाउँदैन थिए होला। वि.सं. १९०३ माघ र १९०४ वैशाखबीच लेखेका चारवटा पत्रमा राजेन्द्रले कान्छी महारानी राज्यलक्ष्मीको कतै उल्लेख गरेको देखिँदैन।

वि.सं. १९०३ चैतमा वाराणसी छोडेर नेपालतर्फ रवाना हुँदा राजेन्द्रको उमेर तेत्तीस वर्षको थियो। वाराणसीमै बसेकी राज्यलक्ष्मीको उमेर २९ वर्ष र दुई छोरा रणेन्द्र र वीरेन्द्रको क्रमशः चौध र दस वर्ष थियो। वाराणसी छोडेपछि राजेन्द्र र राज्यलक्ष्मीको कहिल्यै भेट भएन। राज्यलक्ष्मी त्रिपन्न वर्षसम्म वाराणसीमा बाँचिरहिन्। नेपालमा नै राजेन्द्रले अरू ३४ वर्षसम्म नजरबन्द भई बस्नुपऱ्यो। यसरी नजरबन्द हुँदा उनको उमेर ३४ वर्षको थियो र वि.सं. १९३८ मा स्वर्गवास हुँदा ६८ वर्ष थियो। ■


### सन्दर्भ ग्रन्थ

(१) Rana, Padma Jung, *Life of Maharaja Sir Jung Bahadur*, P. 89
(२) पूर्ववत्
(३) रामजी उपाध्याय, *नेपालको इतिहास*
(४) प्रकाश ए.राज, *विजयराज पण्डित*
(५) Rana, Padma Jung, *Life of Maharaja Sir Jung Bahadur*, P. 92
(६) प्रकाश ए. राज, *विजयराज पण्डित*, पृ. ३२
(७) पूर्ववत्

# अलौपर्व (वि.सं. १९०४ साउन)

वाराणसी पुगेपछि नेपालबाट निर्वासित भएका भारादारहरूले राजेन्द्रलाई भेट्न आउन थाले । वाराणसीमै नेपालबाट निर्वासित भई बसेका राजा रणबहादुर शाह पनि ४३ वर्षअगाडि कसरी नेपाल फर्की सत्तामा फेरि आउन सकेका थिए भन्ने कुरा पनि बुझी आफूले पनि त्यसै गर्न सकिएला भन्ठाने ।

वि.सं. १९०३ फागुनमा राजा राजेन्द्र सुगौलीसम्म आइपुगिसकेका थिए । नेपाल फर्किने कि नफर्किने भनी निर्णय गर्नसकेका थिएनन् । बाबुराम आचार्यको कथनानुसार महारानी राज्यलक्ष्मीलाई साथ लिई आउँछु भनी सुगौलीबाट राजेन्द्रले जङ्गबहादुरलाई पत्र लेखे ।[1] उक्त पत्रको नक्कल भने उनले दिएका छैनन् ।

राजेन्द्रले सुगौलीबाट १९०४ वैशाखवदि १४, १९०४ वैशाखशुदि ३ र १९०४ वैशाखशुदि ३ मा विजयराजलाई लेखेको पत्र भेटिएको छ ।[2] पहिलो पत्रमा "बुढा गुरुज्यू (रङ्गनाथ) सँग र भगुवासँग मुलाकात गरेको कुरामा अघिदेखिका भलाआदमी आशिर्वाद दर्शन गर्न आएपछि भेटघाट गर्नैपर्छ, गरिबक्स्या," "प्राइममिनिष्टर एण्ड कमान्डर इन चीफ जङ्गबहादुर कुँवरलाई दगाको कुरा गरिएको छैन," "वीरध्वज मेरा हुकुमले काटिया" भनी लेखेका छन् ।

१९०४ वैशाखशुदि ३ को पत्रमा "प्राइम मिनिष्टर दगाको बात सुन्दा हड्बडाउँछन् भन्या कुरालाई मैले तेस्तो दगा गर्‍याको पनि छैन, कसैसित मदत गर्‍याको पनि छैन" भनी लेखेका छन् । यसबाट वैशाखको अन्तसम्म पनि उनले के गर्ने भनी निधो गरिसकेको देखिँदैन ।

सुगौलीबाट राजेन्द्रले वैशाखमा नै वाराणसीमा राज्यलक्ष्मीकहाँ कोतपर्वको बारेमा केही प्रश्न गरी पत्र पठाउँछन् ।[3] साथै जङ्गबहादुरले पठाएको "अर्जी" को नक्कल पनि पठाउँछन् । उनले आफूले वीरकेशर पाँडेलाई मार्न, माथवरसिंहको आमाको नाक काट्न र दुई बाहुनलाई मुड्न हुकुम दिएको कुरा स्वीकार गर्छिन् । कोतपर्व आफूले गराएको भनी स्वीकार गरेकी छैनन् । गगनसिंहलाई कसले मारेको भन्ने

बारेमा "लाल झाले मारेर उ मर्दछ, गगनसिंह त हुकुमले मारिएको" भनेर लेखेकी छन् ।

राजेन्द्र नेपाल फर्कन नमानेको बेलामा जङ्गबहादुरले भारादारी सभा बोलाए ।[४] त्यस भारादारी सभाले गरेको निर्णयअनुसार "अबउपान्त हामीहरू प्राइममिनिस्टर एवं कमाण्डर इन चीफ जङ्गबहादुरको आज्ञाअनुसार मात्र काम कारवाहीहरू गर्नेछौं, हजुरको हुकुमअनुसार काम गर्न असमर्थ छौं" भन्ने पत्र राजेन्द्रकहाँ पठाइयो । यसपछि राजेन्द्रले भारादारी सभाका सदस्य र १७ पल्टनलाई जङ्गबहादुर र उनका भाइहरूलाई कैद गरी नेपाल भारत सीमामा रहेको कटहरवनसम्म आफूलाई लिन आउनु भनी पत्र लेखे ।[५] पत्रवाहक दुइ जना सिपाहीहरूलाई वि.सं. १९०४ वैशाख ४ गते गिरफ्तार गरी जङ्गबहादुर अगाडि ल्याइयो । यी दुवैलाई पन्ध्र दिनपछि जुत्तैजुत्ताले हानी मार्न लगाइयो ।

यस घटना भएको भोलिपल्ट भारादारी सभाको अर्को बैठक बोलाइयो । भारादारी सभाका सदस्यले राजेन्द्रलाई राज्यच्युत गरी सुरेन्द्रलाई श्री ५ महाराजाधिराज बनाउने प्रस्ताव पारित गरे । वि.सं. १९०४ वैशाख ३१ गते श्री ५ सुरेन्द्रको राज्यारोहण भयो ।

भारादारी सभाको तर्फबाट राजेन्द्रलाई पठाइएको जानकारी पत्रमा पाँडेहरूसँग मिली भीमसेन थापा जस्तो योग्य मन्त्रीको अन्त गराएको, थापाहरूलाई प्रयोग गरी पाँडेहरूलाई नै खत्तम गराएको र माथवरसिंहको हत्या पनि गराएको भन्ने आरोप लगाइएको थियो । आइमाईलाई देशको हालीमुहाली सुम्पेकोले कोतपर्व र भण्डारखालपर्वजस्तो घटना पनि घट्न गएको कुरा पनि लेखिएको थियो । पत्रमा राजेन्द्रले भारतमै रहन चाहे त्यहीँ भत्ताको व्यवस्था गरिदिने, नेपालमा आउन चाहे पदच्युत राजासरह बस्नुपर्ने कुरा उल्लेख गरिएको थियो ।[६]

राजेन्द्र सो पत्र पाएपछि पर्सा जिल्लाको अलौ भन्ने ठाउँमा आफ्ना सैनिक लिई आए । जङ्गबहादुरले सनकसिंह टण्डनका साथ माहिला साहेबज्यू उपेन्द्र र सैनिकहरू पठाए । वि.सं. १९०४ साउन १३ गते राजेन्द्रको शिविरमाथि काठमाडौंबाट गएको सेनाले हमला गर्‍यो । राजेन्द्रले ल्याएको सेनाको हार भयो, कैयौं सैनिक मारिए[७] र केही भागे । हात्तीमा चढी भारतको सुगौलीतर्फ जान लागेका राजेन्द्रलाई पक्रिएर भक्तपुरको राजदरबारमा नजरबन्द गरी राखियो । यो लडाई अलौमा भएको हुनाले यसलाई "अलौपर्व" भनिन्छ । ■


**सन्दर्भ ग्रन्थ**

(१) *बाबुराम आचार्य, अब यस्तो कहिल्यै नहोस्, पृ. १२०*
(२) *प्रकाश ए.राज, विजयराज पण्डित, पृ. ३७-४०*
(३) *ज्ञानमणि नेपाल, नेपालको महाभारत, पृ. ३१५-३१८*
(४) *बाबुराम आचार्य, पूर्ववत् पृ. १२२*
(५) *ज्ञानमणि नेपाल, पूर्ववत्, पृ. २१८*
(६) *बाबुराम आचार्य, पूर्ववत् पृ. १२४*
(७) *ओल्डफील्डले राजाको पक्षका ५० देखि ६० जना मारिएको कुरा लेखेका छन् ।*

# राज्यलक्ष्मीलाई बात लागेको प्रकरण

श्री ५ राजेन्द्रसँग ६ वर्षको उमेरमा विवाह भएपछि २७ वर्षको उमेरमा आफ्नी सौता साम्राज्यलक्ष्मीको वि.सं. १८९८ मा देहान्त भएपछि २४ वर्षको उमेरमा शक्तिशाली बन्न पुगिन् । झन् वि.सं. १९०२ जेठमा २८ वर्षको उमेरमा राजेन्द्रबाट राजपरिवारका सदस्यबाहेक अन्य सबैलाई सजाय गर्ने, देश निष्कासन गर्ने र पजनी गर्ने अधिकार पाएपछि उनी अत्यन्त शक्तिशाली बनिन् । कोतपर्व र भण्डारखालपर्वपछि नेपालबाट निर्वासित हुँदा उनको उमेर २९ वर्षको मात्र थियो । केही विदेशी र स्वदेशी इतिहासकारले राज्यलक्ष्मीको र गगनसिंहको अनुचित सम्बन्ध थियो भनी आक्षेप लगाएका छन् । यी मध्ये ओल्डफील्ड[1] ले गगनसिंहलाई राज्यलक्ष्मीको प्रेमी भनेका छन् । पर्सिभल ल्याण्डन[2]ले राजा राजेन्द्रले सुरेन्द्र र उपेन्द्रलाई बोलाई गगनसिंहलाई मारेर परिवारको इज्जत बचाउन भनेको कुरा लेखेका छन् । पर्सिभल ल्याण्डनलाई त चन्द्रशमसेरले नै नेपालबारे पुस्तक लेखाउन लगाएका थिए । कोतपर्वबारे उनले लेखेको कुरालाई कति प्रमाणिक मान्ने ? । हृषिकेश शाह[3]ले पनि राज्यलक्ष्मी र गगनसिंहको सम्बन्धबारे लेखेका छन् र यही सम्बन्धको फलस्वरूप राजेन्द्र अथवा सुरेन्द्रले नै गगनसिंहलाई मार्न लगाएको हो कि भन्ने सम्भावनाप्रति संकेत गरेका छन् ।

गगनसिंहको जन्म वि.सं. १८५३ मा भएको थियो र राज्यलक्ष्मी उनीभन्दा २१ वर्ष कान्छी थिइन् । बाबुराम आचार्यले पनि यी दुई बीच उमेरमा धेरै फरक भएको कुरा लेखेका छन् । इतिहासकार त्रिरत्न मानन्धरले पनि यी दुइबीचको अनुचित सम्बन्ध भएको कुरा सत्यको नजिक नभएको कुरा लेखेका छन्[4] । जे भए पनि आफ्नो पक्षका भारादार गगनसिंह मारिएपछि राज्यलक्ष्मीलाई धेरै चोट लागेको कुरा साँचो हो ।

वि.सं. १९०३ मार्गमा कोतपर्व र भण्डारखाल पर्वपछि राज्यलक्ष्मी वाराणसीतर्फ गईन्। उनीसँगै त्यसतर्फ गएका राजेन्द्र भने माघमा नै नेपालको सिमानातर्फ हिँडे भने उनका छोराहरू रणेन्द्र र वीरेन्द्र भने आमासँगै बसे।

राज्यलक्ष्मीबारे लेखिएका ६ वटा पत्र परराष्ट्र मन्त्रालयमा भेटिएको कुरा श्रीदिनेशराज पन्तले प्रकाश पार्नुभएको छ।[५] यिनै पत्र श्री ज्ञानमणि नेपालले "नेपालको महाभारत" शीर्षक पुस्तकमा समावेश गर्नुभएको छ। यी पत्रका तपसिल निम्नबमोजिम छन् :

(क) १९०६ आषाढशुदि १० मा श्री ५ महाराजाधिराज सुरेन्द्रले वैमातृक भाइ रणेन्द्र र वीरेन्द्रलाई वाराणसीमा लेखेको पत्र।

(ख) १९०६ भाद्रशुदि २ मा भक्तपुर दरबारमा नजरबन्द रहेका श्री ५ राजेन्द्रले राज्यलक्ष्मीलाई लेखेको पत्र।

(ग) १९०६ भाद्रशुदि २ मा भक्तपुर दरबारमा नजरबन्द रहेका श्री ५ राजेन्द्रले रणेन्द्र र वीरेन्द्रलाई वाराणसीमा लेखेको पत्र।

(घ) १९०६ साल कार्तिकवदि २ मा श्री ५ बडामहारानी (श्री ५ सुरेन्द्रकी बडामहारानी ?) ले रणेन्द्रलाई वाराणसीमा लेखेको पत्र।

(ङ) १९०६ साल मार्गशुदि ३ मा जङ्गबहादुरले राज्यलक्ष्मीलाई वाराणसीमा लेखेको पत्र।

(च) १९०७ साल मार्गशुदि १० मा भक्तपुर दरबारमा नजरबन्द रहेका श्री ५ राजेन्द्रले बडागुरुज्यू विजयराजलाई लेखेको पत्र।

पहिलो पत्रमा सुरेन्द्रले आफ्ना वैमातृक भाइ रणेन्द्र र वीरेन्द्रलाई राज्यलक्ष्मीको दलबहादुर थापा भन्ने व्यक्तिसँग अनैतिक सम्बन्ध भएको बारेमा लेखेका छन्। दलबहादुरसँग व्यभिचार भई तीन महिनाको गर्भ तुहाएको भन्ने खबर पाएपछि राज्यलक्ष्मीलाई काठमाडौँमा झिकाइएको रहेछ, तर उनी झिकाएको ६ महिनासम्म पनि आइनछन्। बनारसमा राज्यलक्ष्मीका नोकरीमा रहेकाले पनि त्यस्तै कुरा बकेका रहेछन् र साँचो होला भन्ने सुरेन्द्रलाई लागेछ। भाइहरूले आमासँग खानपीन गरेको भए धर्माधिकारको पतिया लिई हाल्न भनेका छन्। पतिया लिएको खण्डमा भातभान्सामा फरक भएनौ भनेका छन्।

दोस्रो पत्रमा राजेन्द्रले राज्यलक्ष्मीलाई लेखेको पत्रमा आफूले बोलाउँदा पनि राज्यलक्ष्मी नेपाल नआएको र आफूले पानी बन्द गरी पठाएको र पत्र पाएको पन्ध्र दिन भित्र नआएको आफैं प्रायश्चित गर्दछु भनी चाँडै आउन लेखेका छन्। राजेन्द्रले सुरेन्द्रलाई वि.सं. १८९९ मा "नानी महाराजधिराज" भन्ने पदवी दिएका थिए। वि.सं. १९०६ मा सुरेन्द्र राजा भएपछि पनि यस पत्रमा उनले छोरालाई "नानी महाराजाधिराज" नै भनेका छन्।

तेस्रो पत्र राजेन्द्रले रणेन्द्रले पठाएको पत्रको उत्तर भनी लेखेका छन्। राज्यलक्ष्मीले

"बद्काम" गरेकोले खर्च भई बाँकी भएको धनदौलतमा दुइ भाई (रणेन्द्र र वीरेन्द्र) को बराबर हक लाग्ने र आमाको भाग नलाग्ने भन्ने कुरा लेखेका छन् । काठमाडौँमा बसेका रेसिडेन्ट र भारतमा "बडा साहेब" लाई पनि लेखेर पठाएको छ र आफूले जस्तो माहिला छोरा उपेन्द्रलाई देखेको त्यस्तै रणेन्द्र र वीरेन्द्रलाई पनि देखेको कुरा लेखिएको छ ।

चौथो पत्र श्री ५ बडामहारानीले आफ्ना देवर रणेन्द्रलाई लेखेको पत्र उनीले पठाएको पत्रको जवाफमा रहेछ । जङ्गब्रहादुरले तिमीहरूको धनदौलत हिनामिना नहोस् भनी र दलवहादुरकहाँ छन् भनी थाहा पाउन यहाँबाट पठाएको काजी सुब्बालाई इसारा दिई त्यहाँका बडासाहेबलाई भनी पक्राउन लगाउनु भनी लेखिएको छ ।

पाँचौ पत्र जङ्गबहादुरले राज्यलक्ष्मीलाई लेखेका छन् । राज्यलक्ष्मीले लेखेको पत्रको जवाफको रूपमा लेखिएको छ । राज्यलक्ष्मीले "यहाँका मानिसले छोरासँग र जङ्गबहादुरसँग सम्बन्ध बिगारी दिए" भनी लेखेकी रहिछिन् । जङ्गबहादुरले राज्यलक्ष्मी र रणेन्द्रको बीच "बेत्यास के कारणले परेको हो ताहीलाई थाहा होला" भनेका छन् । त्यहाँको सम्पूर्ण सम्पत्ति दुई भाग लगाई रणेन्द्र र वीरेन्द्रलाई दिनुपर्ने तर राज्यलक्ष्मीले पनि साहेबज्यूहरूको अंशबाट "पेट पीठ" को व्यवस्था बाँधी इज्जतसाथ काशी क्षेत्रमा वस्नोस् भनेका छन् ।

सम्पत्तिको तीन खण्डको एक खण्ड पाउनुपर्छ भन्ने राज्यलक्ष्मीको दाबी भए आफू बेलायत जान लाग्दा पटनामा माघ महिनाको स्नान गर्न जाने हुनाले त्यहीँ दुई छोरा र नेपालबाट पठाएका काजी र सुब्बालाई समेत लिई आउन अनुरोध गरेका छन् । त्यहाँ दुई साहेबज्यूको चित्त बुझाउने गरी तीन भाग लगाइदिउँला भनेका छन् ।

छैटौ पत्र राजेन्द्रले विजयराजलाई लेखेका छन् । जङ्गबहादुर वि.सं. १९०६ माघदेखि १९०७ पुससम्म बेलायत यात्रामा गएका थिए । उक्त पत्र वि.सं. १९०७ मंसीरमा लेखिएको छ । राजेन्द्रले विजयराजलाई आफू काशी गएपछि राज्यलक्ष्मी (जयसिंहकी बहिनी भनी सम्बोधन गरिएको) गगनसिंहसँग कुन महिनामा बिग्रेकी थिइन्, ठहऱ्याई दलबहादुर थापा र राज्यलक्ष्मीको कायलनामा लेखाई लिइकन आउनु र त्यसपछि आफू प्रायश्चित गरुँला भनी लेखेका छन् ।

राजेन्द्रले विजयराजलाई वि.सं. १९०३ माघदेखि १९०४ वैशाखको बीच चार पत्र लेखेका छन् ।[८] ओल्डफील्डले एकजना दलबहादुर भन्ने प्रवासी नेपाली उपर राज्यलक्ष्मीले आफ्नो धेरै पैसा उडाइन् भनी लेखेका छन् ।[९] ओल्डफील्ड त्यसताका अंग्रेजी दूतावासमा डाक्टर थिए । यो घटना भएपछि पनि जङ्गबहादुरको दलबहादुर थापासँग राम्रो सम्बन्ध भएको कुरा निजले वि.सं. १९०७ फागुनमा लेखेको पत्रबाट देखिएकोले "गगनसिंह र दलबहादुरसँगको राज्यलक्ष्मीको व्यभिचारको आरोपमा जङ्गबहादुरको

राजनीति पनि घुसेको छ कि भनी विचार गर्नुपर्ने अवस्था आइसकेको छ" भन्ने इतिहासकार श्रीदिनेशराज पन्तको भनाइ छ।[७]

वि.सं. १९०७ मा बेलायत यात्रा गर्न लाग्दा जङ्गबहादुर प्रधानमन्त्री भएको चार वर्ष मात्र भएको थियो र आफू देश बाहिर गएको बेलामा आफूलाई अपदस्थ गर्न राज्यलक्ष्मीको नेतृत्वमा आफ्ना विरोधिहरूले केही गर्दछन् कि भन्ने उनलाई डर लागेको पनि हुन सक्दछ। अर्कोतिर राज्यलक्ष्मीको विरुद्ध उजुरीको पत्र उनका छोरा रणेन्द्रले नै पठाएको देखिन्छ। ■

## सन्दर्भ ग्रन्थ


(१) *Oldfield, Amborse, **Sketches from Nepal**, P.344*

(२) *Landon, Perceval, **Nepal**, P.121*

(३) *Shah, Rishikesh, **Modern Nepal**, P.199*

(४) *त्रिरत्न मानन्धर, **नेपालको इतिहासमा जङ्गबहादुर**, २०४८, पृ.११*

(५) *दिनेशराज पन्त, श्री ५ राजेन्द्रको कान्छी रानीसम्बन्धी अप्रकाशित ६ वटा पत्र, **पूर्णिमा**, पूर्णाङ्क ७०, २०४३ आश्विन*

(६) *Oldfield Amborse, **Sketches from Nepal**, P.387*

(७) *दिनेशराज पन्त, मन्तव्य (यस पुस्तकको प्रथम संस्करण)*

(८) *प्रकाश ए.राज, **विजयराज पण्डित**, पृ. ३४-४०*

# वाराणसीमा त्रिपन्न वर्ष (वि.सं. १९०३-१९५६)

## वाराणसीमा नै किन ?

शताब्दीयौँदेखि नेपालको सम्बन्ध वाराणसी (काशी) सँग रहेको छ। वि.सं. १८०० मा श्री ५ पृथ्वीनारायण शाह त्यहीँ तीर्थयात्रा गर्न पुगेका थिए। उनका नाति रणबहादुर शाह पनि वि.सं. १८५७ देखि १८६० सम्म नेपालबाट त्यहीँ आई बसेका थिए।

त्यसताका नेपालबाट विभिन्न कारणवश निष्कासित भएका भारादारहरू कि त नेपालको दक्षिणी सीमापार विहारको चम्पारण जिल्लामा रहेको बेतियामा जान्थे कि त वाराणसी (काशी) मा। धार्मिक कारणवश पनि वृद्धावस्थामा काशीवास गर्न र त्यही मर्न पाए मुक्ति हुन्छ भन्ने धारणा रहेकोले र संस्कृतको अध्ययन गर्न पनि धेरै नेपालीहरू त्यहाँ जाने गर्दथे।

रणबहादुर शाहले वाराणसीमै बसेर नेपाल फर्कँदा गुमेको राज्यशक्तिसमेत फिर्ता पाउन सफल भएका थिए। यही कारणले होला राज्यलक्ष्मीले पनि आफ्नो निर्वासित जीवनकालमा वाराणसीमा नै बस्न मन पराएको।[१]

## जेठा छोरा (साहिँला साहेबज्यू) रणेन्द्रसँग बनारसको अदालतमा मुद्दा

एकजना इतिहासकारले[२] वाराणसीमा राज्यलक्ष्मीउपर जेठा छोरा रणेन्द्रले मुद्दा गरेपछि तत्काल बसिरहेको ईश्वरीगंगा महलबाट निस्केर कान्छा छोरा वीरेन्द्रसँग मामूरगंज गइ बस्नुपरेको कुरा लेखेका छन्। कोतपर्व हुने बेलामा नै रणेन्द्रको उमेर १४ वर्ष भएको र विवाह भइसकेको देखिन्छ।

सो कुरा कोतपर्व भएको सात दिनपछि राज्यलक्ष्मीले विजयराजलाई दिएको पत्र[३] मा "साहिला नानी र साहिँला बुहारीलाई समेत पहिलेको पनि गुरुको घर भएकोले दीक्षा गुरुको पदवी दिएको" भनेर लेखिएको छ।

सायद रणेन्द्र पनि आफ्नो रानीको साथ भण्डारखालपर्वपछि नै वाराणसी गएका थिए। एकजना श्यामलदास भन्ने व्यक्तिले हिन्दीमा लेखेअनुसार राजेन्द्रले नेपालबाट वाराणसी लगेको नगद र जवाहरातमध्ये

राजेन्द्र नेपाल फर्केपछि राज्यलक्ष्मीसँगै थियो र केही छोराहरूले उडाए। बाँकी रहेको ६ लाख रुपैयाँ अंग्रेज सरकारले ५ प्रतिशत ब्याजमा लगाइदिए र खर्चको बन्दोबस्तको काम वाराणसीको सरकारी संयन्त्रको कमिश्नरले गर्न थाले।

वि.सं. १९०७ पुसमा जङ्गबहादुर बेलायत यात्राबाट नेपाल फर्कन लाग्दा वाराणसीमा पनि केही दिनको निमित्त बसेका थिए।[४] त्यहाँ उनलाई भेट्न साहिँला साहेबज्यू रणेन्द्र र काहिँला साहेबज्यू वीरेन्द्र पनि आएका थिए। उनीहरूले वाराणसीमा रहेको आफ्नो सम्पत्तिबारे आमासँग भइरहेको झगडाबारे बताए।

जङ्गबहादुरले सम्पत्तिको आमा र दुई छोराका बीच तीन भाग लगाइदिए। वि.सं. १९१४ मा भारतको उत्तर प्रदेशका विभिन्न ठाउँमा अंग्रेजविरुद्ध भएको स्वतन्त्रता संग्राम (जसलाई अंग्रेजले Mutiny अथवा गदर भन्दथे) दबाउन जङ्गबहादुर भारत जाँदा वाराणसी पनि केही दिन बसेका थिए। उनलाई भेट्न रणेन्द्र र वीरेन्द्र आएका थिए, तर उनले राज्यलक्ष्मीलाई भने भेट दिएनन्।

एक इतिहासकारका अनुसार[५] रणेन्द्रका एउटा छोरा योगप्रताप थिए जो पछि जोगी भएका थिए। उनकी छोरीको विवाह चम्पारण जिल्लाको आवागढको राजकुमारसँग भएको थियो। उक्त विवाहमा लमी काम गर्ने रणेन्द्रका सेवक गोठु बस्नेतले जङ्गबहादुर, चौतरिया गुरुप्रसाद र विजयराजलाई गाली गरेर पत्र पठाएका थिए।[६]

## वि.सं. १९३७ मा रणोद्दीपसिंहले भारत भ्रमण गर्दा राज्यलक्ष्मीबारे भएका कुरा

नेपालका श्री ३ महाराज रणोद्दीपसिंह वि.सं. १९३७ मा भारतमा तीर्थयात्रा गर्न गए। तीर्थयात्रा गर्न भारत जाने सिलसिलामा तात्कालिक अंग्रेज रेसिडेन्टसँग कुरा गर्दा नेपाल सरकारले राज्यलक्ष्मीलाई प्रतिमहिना रु. १०० भत्ता दिइराखेकोमा "बुढेसकालमा मलाई दूध खान पुगेन" भनी पत्र लेखेको कुरा उल्लेख छ।[७]

## काहिँला साहेबज्यू वीरेन्द्रविक्रम शाहबारे

वाराणसी जाँदा दसवर्ष जति उमेर भएका वीरेन्द्रवारे दुई पत्र भेटिएका छन्। रामनगरको राजाको छोरीसँग उनको विवाहको कुरा चलेको रहेछ। उनी रामनगर पनि गएका रहेछन्। त्यसवेला उनका सेवक भीमप्रकाश शाहीले[८] जङ्गवहादुरलाई लेखेको पत्र वीरेन्द्रको रामनगरयात्रावारे लेखिएको छ। राज्यलक्ष्मी र उनका छोराहरूको गतिविधि पत्ता लगाउन जङ्गवहादुरले जासूस छोडेका रहेछन्। निजले रामनगरमा राजाको छोरीसँग धेरै पटक भेट गरेछन्। अब विवाहको तयारी गर्नुपर्‍यो भनी राजाले साइपाटा ल्याउन भनेछन्।

वीरेन्द्रले "मलाई तपाईको छोरी मन परेन, विवाह गर्दिनँ" भनी भन्दा राजाकी छोरीले आत्महत्या गर्ने धम्की दिइछन्। राजाले "जिन्दगीभरि खर्च भराउने गरी अदालतमा नालिस दिउँला" भनी धम्की दिएछन्। पछि गएर काहिँला साहेबज्यूको विवाह यिनै राजाकी छोरीसँग भएको देखिन्छ। यो विवाह कुन सालमा भयो

भन्ने थाहा छैन तर यसले वीरेन्द्रलाई सम्पन्न बनायो । रामनगरका राजा प्रह्लाद सेनका कोही छोरा नभएकोले उनले वीरेन्द्र र आफ्नी छोरीबाट जन्मेका मोहनविक्रम शाह (प्रथम) लाई आफ्नो उत्तराधिकारी बनाए ।

वाराणसीमा बसेका काहिँला साहेबज्यूलाई जङ्गबहादुरले पठाएको एक अर्को पत्र पनि छापिएको छ ।[९] जङ्गबहादुरले यिनलाई "असल जातका कुखुरा पठाइदिन र रुपैयाँ पछि पठाइदिउँला" भनी लेखेका छन् । त्यसताका कुखुरा लडाउने खेल हुने गर्दथ्यो र साहेबज्यू वीरेन्द्र पनि यस्तो खेलमा अभिरुचि राख्ने व्यक्ति भएको बुझिन्छ ।

जङ्गबहादुरले "अरु महाजनबाट कुखुरा झिकाउँदा जात छुट्याउन नसक्ने हुनाले जँचाइकन पठाइबक्सनुहुन र असलको पैसा लिई कमसल नपठाउने" बेहोराको पत्र लेखेका छन् । यस पत्रबाट सत्ताच्युत भएका र पैसाको समस्यासमेतले साहेबज्यू वीरेन्द्रलाई जङ्गबहादुरले हेपेको देखिन्छ ।

## विश्वनाथ मन्दिरमा अंग्रेजलाई पिटेको घटना

यस घटनाबारे पूर्व प्रधानमन्त्री कृष्णप्रसाद भट्टराईले आफ्नो परिवारमा सुनेको भनी लेखेका हुन् (कान्तिपुर २०६०/४/१४) । राज्यलक्ष्मीको रिस निकै उग्र थियो ।

काशीमा शिवरात्रिको दिन राज्यलक्ष्मी बग्गीमा चढेर रिसल्ला र अंगरक्षकको साथ गइछन् । ज्ञानवापीमा बग्गी राखेर भित्र दर्शनलाई गइछन् । त्यसताका गैर हिन्दु अंग्रेजहरूले मन्दिरभित्र प्रवेश गर्न पाउँदैनथे । विश्वनाथको मन्दिरभित्र एउटा सानो प्वालबाट हेर्न पाउँथे । बनारसको जिल्ला मेजिस्टेट एक अंग्रेज रहेछ । उसले पनि भित्र गई प्वालबाट विश्वनाथजीको मूर्ति हेर्न गएछ ।

त्यसै बेला राज्यलक्ष्मी दर्शन गरेर फर्किछन् । आफूले बग्गी राखेको ठाउँमा अंग्रेजको मोटर देखिछन् । त्यही बेला अंग्रेज पनि आइपुगेछ । राज्यलक्ष्मीले आफ्नो सइसको हातबाट कोर्रा खोसेर अंग्रेजलाई हिर्काउन थालिछन् । 'नो-नो' भन्दै अंग्रेज रक्ताम्य भएछ । त्यसपछि राज्यलक्ष्मीमाथि मजिस्ट्रेटले कुनै मुद्दा चलाएनछ । कृष्णप्रसाद भट्टराईको यो कथा कति साँचो हो मनन गर्नुपर्दछ । के वाराणसीमा मोटर राज्यलक्ष्मीको जीवनकालमा आइसकेको थियो ? वाराणसीमा छँदा आर्थिक समस्याले सताएकी राज्यलक्ष्मीले बग्गी रिसल्ला र अंगरक्षक लिएर हिँड्न सक्दथिन् होला ?

## राज्यलक्ष्मीले के देखिन् ?

वाराणसीमा राज्यलक्ष्मीको निर्वासित जीवन ५३ वर्षको हुन गयो । उनको देहान्त वि.सं. १९५६ सालमा हुँदा[११] उनको उमेर ८२ वर्षको थियो । त्यसबेला उनले नेपाल सरकारबाट महिनाको रु. १५०/- दूध खाने भत्ता पाउँथिन् ।[१२] त्यसताका उनको आर्थिक स्थिति पनि त्यति राम्रो नभएको देखिन्छ । वाराणसीमा उनी बसेको ठाउँ मामूरगंज पनि गंगाजीको किनारामा नभई चार पाँच किलोमीटर टाढा हुनाले प्रतिदिन गंगास्नान गर्न पनि पाउँदैनथिइन् होला ।

एउटा कुरा राज्यलक्ष्मीले के हेर्न पाइन् भने कोतपर्व र भण्डारखालपर्वका अनेक पात्रहरू वाराणसीमै काशीवास गर्न आएका र त्यहीँ दिवंगत भएको थियो ।

वि.सं. १९०४ मा अलौपर्वमा राजेन्द्रलाई सहायता गर्न पुगेका पुराना मुख्तियार तथा गुरुज्यू रंगनाथ पौडेल काशीवास गर्न त्यहीं बसेका थिए र पछि त्यहीँ उनको देहान्त भयो । वि.सं. १९०३ को भण्डारखालपर्वका पात्र विजयराज नेपालमा जङ्गबहादुरसँग केही मनोमालिन्य भएपछि वि.सं. १९२१ देखिनै काशीवास गर्न आएका थिए । चौध वर्षसम्म रामघाटमा गंगाजीको किनाराको घरमा बसेपछि उनको वि.सं. १९३५ मा त्यहीँ देहान्त भएको थियो । राज्यलक्ष्मीले नै वि.सं. १९०३ मा कोतपर्वपछि प्रधानमन्त्री बनाइएका जङ्गबहादुरको पनि वि.सं. १९३३ मा रौतहटको पत्थरघट्टामा देहान्त भइसकेको थियो ।

वि.सं. १९४२ मा रणोद्दीपसिंहको हत्या भएपछि जङ्गबहादुरकै सन्तान पनि प्रधानमन्त्री हुने रोलबाट झिकिए र कैयौं निर्वासित गरिए । जङ्गपुत्र जगत्जङ्ग र नाति जुद्धप्रताप जङ्गको नेपालमै हत्या गरियो । यीमध्ये केही त निर्वासित जीवन बिताउन वाराणसी नै आएका थिए ।

वि.सं. १९४९ तिर शहीद शुक्रराजका पिता माधवराज जोशीले जङ्गबहादुरका छोरा रणवीरजङ्गलाई वाराणसीमा भेटेका थिए ।[१३] वि.सं. १९४२ मा रणोद्दीपसिंहलगायत जङ्गबहादुरका छोराहरूको गोत्रहत्याको प्रायश्चित गर्न वीरशमसेरले वाराणसीमा यज्ञ गराउन लागेकै वर्षमा (वि.सं. १९५६) राज्यलक्ष्मीको देहान्त भएको थियो ।[१४] राज्यलक्ष्मीको देहान्त हुने बेलामा नेपालमा वीरशमसेरको शासन पनि सिद्धिने बेला भइसकेको थियो ।

नेपालको इतिहासको अनेक घटनाक्रमकी जन्मदाता राजलक्ष्मीलाई दीर्घजीवी भई यी पात्रको अन्त हेर्न पाउँदा कस्तो लाग्यो होला ? राज्यलक्ष्मीको देहान्त भएको पचास वर्षजति पछि वि.सं. २००७ मा नेपालमा राणाशासनको अन्त भई प्रजातन्त्र आएको थियो । प्रजातन्त्र ल्याउने प्रमुख पात्रमध्ये एक वि.सं. १९०३ मा राज्यलक्ष्मीसँगै बनारस जाने काठमाडौं पकनाजोल निवासी पुरोहितका पनाति कृष्णप्रसाद भट्टराई थिए । राज्यलक्ष्मीको देहान्त भएको एक शताब्दीपछि वि.सं. २०४६ मा राज्यलक्ष्मीले हटाउन खोजेका श्री ५ सुरेन्द्रकै सन्तान श्री ५ वीरेन्द्र नेपालको राजगद्दीमा थिए । त्यसबेला प्रधानमन्त्री कृष्णप्रसाद भट्टराई थिए । त्यसबेला नेपाली जनता नै सार्वभौम भइसकेका थिए । जनआन्दोलनपछिका सबभन्दा पहिला प्रधानमन्त्री नै कृष्णप्रसाद भट्टराई भए ।

राज्यलक्ष्मीका छोरा वीरेन्द्रको विवाह रामनगरको राजा प्रह्लाद सेनका छोरीसँग भएको थियो । प्रह्लाद सेनका छोरा कोही नहुँदा वीरेन्द्रका छोरा (राज्यलक्ष्मीका नाति मोहनविक्रम शाह प्रथम) रामनगरको राजा हुन पुगे । कृष्णप्रसाद भट्टराईको परिवार रामनगरको राजाको परिवारको समेत पुरेत हुन पुग्यो ।[१५]

कृष्णप्रसाद भट्टराईका पिता संकटाप्रसाद भट्टराई (भोटु पण्डित) रामनगरका राजाको पुरोहित भएको कुरा उहाँले आफैं लेख्नुभएको छ । आफूले दिएको अन्तर्वार्तामा कृष्णप्रसाद भट्टराईले आफ्नो बराजु कमलाकान्त वि.सं. १९०३ मा कोतपर्व

र भण्डारखालपर्वपछि महारानी राज्यलक्ष्मी र साहेबज्यू रणेन्द्र तथा वीरेन्द्रसँगै लागी वाराणसी पुगी महारानीको पुरेत भएको कुरा उल्लेख गर्नुभएको छ।[१६]

उहाँको भनाइअनुसार उहाँको पुर्खालाई राजेन्द्रले बनारसमा तीन घर किनिदिएका थिए र रामनगरमा पनि जमीन दिएका थिए। वि.सं. १९०३ मार्गमा रानीसँग वाराणसी पुगेका राजेन्द्र तीन/चार महिनापछि नै नेपालको सिमानातर्फ प्रस्थान गरिसकेका थिए। वाराणसीमा बसेको बेलामा तीन/चार महिनामा नै कृष्णप्रसादका बराज्यूलाई तीन घर किनिदिएका थिए भन्ने कुरा त्यति पत्यारलाग्दो छैन। अलौपर्व भएको वि.सं. १९०४ पछि त राजेन्द्र काठमाडौं पुगे र वाराणसी कहिले पनि फर्केर आएनन्। उक्त तीनवटा घर राज्यलक्ष्मीले किनिदिएको जस्तो लाग्दछ। रामनगरसँग पनि राजेन्द्रको प्रत्यक्ष सम्बन्ध थिएन। त्यहाँ जग्गा किनिदिने व्यक्ति पनि राजेन्द्र नभई राजेन्द्रका काहिँला छोरा वीरेन्द्र अथवा नाति मोहनविक्रम शाह (प्रथम) भएको जस्तो देखिन्छ।

राज्यलक्ष्मीका छोरा रणेन्द्रको छोरीको विवाह आवागढको राजकुमारसँग भएकोमा अल्पायुमै तिनले विधवा हुनुपरेको थियो। यिनको छोराको ११ वर्षको उमेरमा देहान्त भएको थियो। राज्यलक्ष्मीका अर्का छोरा वीरेन्द्रको विवाह रामनगरमा भएकोमा एउटा छोरा पाएका थिए जो पछि मोहनविक्रम शाह (प्रथम) कहलाए। उनको सन्तान नहुँदा राज्यलक्ष्मीको वंशनै मासियो। ■

**सन्दर्भ ग्रन्थ**–


*(१) प्रकाश ए.राज, **वाराणसी (काशी) सँग नेपालको सम्बन्ध,** Contribution to Nepalese Studies, January 2000.*
*(२) रामजी उपाध्याय, **नेपालको इतिहास,** पृ. २६३*
*(३) प्रकाश ए. राज, **विजयराज पण्डित,** पृ. ३०*
*(४) Purushottam Shamsher Rana, **Jung Bahadur Rana,** P-69*
*(५) रामजी उपाध्याय, **नेपालको इतिहास***
*(६) ज्ञानमणि नेपाल, **जङ्गबहादुरका मान अपमानका कुरा, प्राचीन नेपाल,** २०४२ कार्तिक*
*(७) ज्ञानमणि नेपाल, **वलीअहद त्रैलोक्य वीर विक्रमकी महारानीहरू र रणोद्दीपसिंहको तीर्थयात्रा, प्राचीन नेपाल,** संख्या ७८*
*(८) स्वर्गवासी रामजी तिवारीको संग्रहमा रहेका अप्रकाशित पत्र, **पूर्णिमा,** पूर्णाङ्क ७७, २०४३ आश्विन*
*(९) पूर्ववत्*
*(१०) अम्बिकाप्रसाद उपाध्याय, **नेपालको इतिहास र रामनगरको इतिहास,** सन् १९८६*
*(११) ज्ञानमणि नेपालले परराष्ट्र मन्त्रालयमा भेट्टाउनु भएको कागत बमोजिम उहाँबाटै पाएको जानकारी*
*(१२) शुक्रराज शास्त्री, **शहीदको कलम से,** पृ. २२६*
*(१३) प्रकाश ए. राज, **यज्ञको निमन्त्रण, नेपाली,** २०५१ साउन, भदौ, असोज*
*(१४) कृष्णप्रसाद भट्टराई, ऋद्धिवहादुरको बारेमा, **उन्नयन,** पूर्णाङ्क २५, २०४५ श्रावण, पौष*
*(१५) राजेश गौतम, **कर्मयोगी राजनीतिज्ञ श्री कृष्णप्रसाद भट्टराई,** वी.पी. प्रकाशन, २०५७*
*(१६) रामजी उपाध्याय, **नेपालको इतिहास,** पृ. २६२*

# राज्यलक्ष्मीको रामनगरसँग सम्बन्ध

नेपालको चितवन जिल्लाको दक्षिणमा भारतको विहार राज्यको चम्पारण जिल्ला रहेको छ । चितवन जिल्लामा नेपाल भारत सीमा नै चुरे पहाड (जसलाई चितवनमा सोमेश्वर पहाड भनिन्छ) को पानीढलो हो । चुरे पहाडको दक्षिणमा रामनगर राज्य रहेको थियो । हालै पूर्वी चम्पारण र पश्चिमी चम्पारण गरी यस जिल्लाको विभाजन गरिएको छ । हालको पश्चिमी चम्पारणमा रामनगर भन्ने सानो राज्य थियो ।

चौविसी राज्य तनहुं स्वतन्त्र छँदाखेरि रामनगर पनि तनहुंकै अधीनमा थियो । वि.सं. १८३९ मा तनहुंको नेपालसँग एकीकरण भयो । तनहुँका अन्तिम राजा हरकुमारदत्त सेन थिए । आफ्नो राज्य नेपालसँग विलय भएपछि उनी रामनगरमा आफ्नो अधीनको भूमिमा गए । एकीकरण हुनुभन्दा तनहुं स्वतन्त्र, सार्वभौमिक राज्य थियो भने रामनगर राज्य पूरा रूपले स्वतन्त्र राज्य थिएन । रामनगरका राजा वास्तवमा रजौटा थिए ।

यिनीपछि चौथो पुस्तामा प्रह्लाद सेन रामनगरका राजा भए । यिनकी छोरी वोधकुमारीको राज्यलक्ष्मीका कान्छा छोरा वीरेन्द्रविक्रम शाहसँग विवाह भयो । वीरेन्द्र र वोधकुमारीका छोरा मोहनविक्रम शाह (प्रथम) भए । पर्सिभल ल्याण्डनले चन्द्रशम्शेर प्रधानमन्त्री हुंदा लेखेको पुस्तकमा रहेको वंशावलीमा रणेन्द्र अथवा वीरेन्द्रका छोराको नाम लेखिएको छैन ।

प्रह्लाद सेनका छोरा थिएनन् । उनको देहान्त वि.सं. १९३६ मा भएको थियो । उनले आफ्नो छोरीपट्टिका नाति मोहनविक्रम शाह (प्रथम) लाई आफ्नो उत्तराधिकारी मानी बसीयतनामा गरिदिएका थिए ।[१]

प्रह्लाद सेनकी रानी र मोहनविक्रमको बीच उत्तराधिकारी को हो भन्ने कुरामा विहारको अदालतमा मुद्दा पऱ्यो । मुद्दा मोहनविक्रमले वि.सं. १९४५ मा जिते । उनले २३ वर्षसम्म राज्य गरे । वि.सं. १९६८ मा उनको स्वर्गवास भयो । यसरी राजलक्ष्मीले आफूले चाहे जस्तो छोरा रणेन्द्रलाई नेपालको राजसिंहासनमा बसाउन

सकिनन्, तर उनका नाति मोहनविक्रम (कान्छो छोरा वीरेन्द्र पुत्र) भने रामनगर राज्यको राजा हुन पाए। मोहनविक्रमले हुमायू कल्कीसहित श्रीपेच लगाएको चित्र अम्बिकाप्रसाद उपाध्यायले लेखेको[२] पुस्तकमा छापिएको छ।

वि.सं. १९५६ मा वाराणसीमा त्रिपन्न वर्षदेखि बसिरहेकी राज्यलक्ष्मीको देहान्त भयो। उनको सम्पूर्ण श्रीसम्पत्ति कसले पाउने भनी उनका जेठा छोरा रणेन्द्रका पुत्र योगप्रताप र कान्छा छोरा वीरेन्द्रका पुत्र मोहनविक्रम बीच बनारसको अदालतमा मुद्दा चल्यो। मोहनविक्रमले मुद्दा जिती सम्पूर्ण श्रीसम्पत्ति पाए।

योगप्रतापले इलाहाबाद उच्च न्यायालयमा अपिल गरे तर त्यहाँ उनको हार भयो। मोहनविक्रमको पक्षमा पैरवी गर्ने रामनगरका मन्त्री देवीप्रसाद उपाध्याय (पौडेल) थिए। देवीप्रसादकी नातिनी सुषमाको विवाह बी.पी. कोइरालाका ज्येष्ठपुत्र प्रकाश कोइरालासँग भएको थियो। यिनकी छोरी प्रसिद्ध फिल्मी कलाकार मनीषा कोइराला हुन्।

मोहनविक्रम शाह (प्रथम) का चार रानी थिए। यीमध्ये गोरखपुरकी ठाकुर वंशकी कन्या, नेपालको पर्वत जिल्लाको मल्लाजको दुर्गादत्त शाहीकी छोरी, गह्रौंकोट बस्ने खाँडकी छोरी र कान्छी बोधकुमारी गह्रौंकोटकी खाँडकी छोरी थिइन्। रामराजाको देहान्त हुने बेलासम्म बोधकुमारी मात्र बाँचेकी थिइन्।

मोहनविक्रम शाह (प्रथम) आफ्नो धेरैजसो समय वाराणसी र रामनगरमा बिताउँथे। यिनी मोतीराम भट्टका समकालिक थिए। वि.सं. १९४८ र १९५० मा मोतीरामले छपाएका केही रचना रामनगरका राजा मोहनविक्रम शाह, मन्त्री देवीप्रसाद उपाध्याय र मोहनविक्रमका प्राइभेट सेक्रेटरी तेजबहादुर रानालाई समर्पण गरेका छन्।[३]

मोतीरामले भानुभक्तको जीवनी लेखी छपाउँदा पनि मोहनविक्रम शाहबाट आर्थिक सहायता पाएको हुने सम्भावना छ। वि.सं. १९५१ मा कलकत्तामा अध्ययन गर्न बस्दा मोतीरामले हेमराजलाई आफ्नो आर्थिक अवस्था खराब भएको कुरा लेखेको कुरा यस पंक्तिका लेखकले प्रकाशित गराएको छ।[४] मोतीरामले हेमराजबारे कविता पनि बनाएका छन्।[५] मोतीरामले मोहनविक्रम शाह (प्रथम) का बारेमा पनि कविता बनाएका छन्।

मोहनविक्रम शाह (प्रथम) ले आफ्नो छोरा नहुँदा आफ्नो नजिकका दाजुभाइ उपेन्द्रविक्रमका छोरा धीरेन्द्रविक्रम र बागकी कान्छीमैयाँ (जङ्गबहादुरकी छोरी) दीपकुमारीकी नाति आफ्नो जस्तै नाम भएका मोहनविक्रम शाह (द्वितीय) लाई धर्मपुत्र लिएका थिए जसलाई रामराजा पनि भनिन्छ। धर्मपुत्र लिँदा सकेसम्म सबभन्दा नजिकको दाजुभाइको सन्तानबाट लिनुपर्ने चलन छ। राजेन्द्रका कान्छी रानीका नाति मोहनविक्रम भए भने उनकी जेठी रानीका छोरा उपेन्द्रका नाति अर्का मोहनविक्रम भए।

श्री ५ पृथ्वीवीरविक्रम शाहको वि.सं. १९६८ मा स्वर्गवास भएपछि उनका एकमात्र पुत्र श्री ५ त्रिभुवन नेपालको राजगद्दीमा बसे। पृथ्वीवीरको किरिया गर्ने काम नजिकका नातेदार मोहनविक्रम शाहले

गरे जसलाई रामनगरमा मोहनविक्रम (प्रथम) ले धर्मपुत्र बनाएका थिए।

त्यसैबेला (वि.सं. १९६८ मा नै) मोहनविक्रम शाह (प्रथम) को देहान्त भयो, तर आफूले पहिले नै किरिया बसिराखेको हुनाले आफ्नो धर्मपिताको किरिया बस्न रामराजा तुरुन्त रामनगर जान सकेनन्।[७] मोहनविक्रम शाहले एउटा वसीयतनामा बनाएर वि.सं. १९६१ मा रामराजालाई धर्मपुत्र बनाएका थिए। पछि अर्को वसीयतनामा लेखेर आफ्नी रानी छेत्रकुमारीलाई आफ्नो उत्तराधिकारी बनाएका थिए।

मोहनविक्रम शाहको देहान्त भएपछि छेत्रकुमारी र रामराजाको बीच रामनगरको बारेमा अदालतमा मुद्दा चल्यो। मुद्दामा मोहनविक्रम शाह (द्वितीय) का तर्फबाट पैरवी "शारदा" का सम्पादक ऋद्धिबहादुर मल्लका भाइ सिद्धिबहादुरले गरे। यो मुद्दा विहारको उच्चतम न्यायालय भई इङ्गल्याण्डको प्रिभी काउन्सिलसम्म पुग्यो। प्रिभी काउन्सिलबाट छेत्रकुमारी जीवित छउन्जेलसम्म उनी उत्तराधिकारी हुने, पछि रामराजा उत्तराधिकारी हुने फैसला भयो। वि.सं. १९९४ मा छेत्रकुमारीको देहान्त भएपछि मोहनविक्रम शाह (द्वितीय) रामराजा रामनगरको राजा भए। मुद्दामामिला गर्दा लाखौँ रूपैयाँ खर्च भएको कुरा बुझिएको छ।

रामराजा जुद्धशमसेरकी जेठी छोरी सीता महारानीसँग विवाह गरेका थिए। जुद्धशम्सेरका छोरा हरिशम्सेरकी सुपुत्री श्री ५ महेन्द्रका बडामहारानी रत्नराज्यलक्ष्मी होईबक्सन्छ। रामराजाका छोराहरू विहार राज्यमा विधायक, विहार सरकारको खेलकूद मन्त्री भएका थिए।[८]

यसरी कोतपर्वकी महारानी राज्यलक्ष्मीको इतिहास काठमाडौँबाट वाराणसी र त्यसपछि विहारको चम्पारण जिल्लाको रामनगर पुग्छ। उनको आफ्नो वंशमा कोही बाँकी रहेन, नातिले आफूले रामनगरको राजा हुन पाएर पनि छोरा नभएकोले धर्मपुत्र लिनुपर्‍यो। वि.सं. १९०३ मा राज्यलक्ष्मीसँगै वाराणसी गएका पुरोहितका नाति रामनगरमा पनि राजपुरोहित भए र उनका छोरा वि.सं. २०४६ को जनआन्दोलनपछिका नेपालका पहिला प्रधानमन्त्री भए। उनको नाम हो कृष्णप्रसाद भट्टराई। ■

## सन्दर्भ ग्रन्थ


*(१) रामजी उपाध्याय, **नेपालको इतिहास** पृ. १३४*

*(२) अम्बिकाप्रसाद उपाध्याय, **नेपालको इतिहास र रामनगरको इतिहास**, पृ. १६७*

*(३) शरद्‌चन्द्र शर्माबाट व्यक्तिगत रूपमा प्राप्त जानकारी*

*(४) प्रकाश ए. राज, **मोतीरामबारे केही नयाँ कुरा**, मधुपर्क, २०३१ बैशाख*

*(५) प्रकाश ए. राज, **विद्वच्छिरोमणि हेमराज शर्मा***

*(६) रामजी उपाध्याय, **नेपालको इतिहास***

*(७) भुवनलाल प्रधान, **सुब्बा ऋद्धिबहादुर मल्ल र शारदा, उन्नयन**, पूर्णाङ्क २५, २०५४ श्रावण-पौष।*

*(८) डिल्लीराम मिश्र, **नेपाल राज्यमा तनहुँ**, पृ. ११८५*

# राज्यलक्ष्मीको मूल्याङ्कन

इतिहासले राज्यलक्ष्मीलाई ज्यादै नकारात्मक रूपले मूल्याङ्कन गरेको देखिन्छ। उनकै हातमा हुकुम आएको बेलामा कोतपर्वमा २२ जना[१] मारिएका थिए र २४ जनाले भागेर ज्यान बचाएका थिए। कोतपर्व अगाडि जनरल गगनसिंह मारिएका थिए भने कोतपर्व हुनासाथ राज्यलक्ष्मीकै हुकुमले भवानीसिंहलाई मारियो।

हुन त गगनसिंह राज्यलक्ष्मीका मन परेका थिए, तर राज्यलक्ष्मीकै हातमा सत्ता भएको बेलामा तीन प्रधानमन्त्रीहरू रणजङ्ग पाँडे, माथवरसिंह थापा र फत्यजङ्ग चौतरियाको हत्या भएको हुनाले त्यसको जिम्मेवारी उनैमा आउँछ। कोतपर्वमा मारिएका भारादारमध्ये ७ वटा काजी र ६ वटा सरदार थिए।

भण्डारखालपर्वमा मारिने १३ जनामध्ये एक काजी र एक सरदार थिए।[२] यी सब हत्याकाण्डको मूल कारण थियो राज्यलक्ष्मीको आफ्ना छोरा रणेन्द्रलाई नेपालको राजगद्दीमा राख्ने उत्कट अभिलाषा। राजा राजेन्द्र कमजोर हृदयका थिए त्यसैले उनले कोतपर्व र भण्डारखालपर्व रोक्न सकेनन्। आफू राजा हुँदाहुँदै रानीलाई हुकुम दिने, छोरालाई "नानी महाराजाधिराज" को पदवी दिने, कोतपर्व र भण्डारखालपर्वपछि निर्वासित भई जान लागेकी रानीको पछिपछि लागी वाराणसी जाने जस्ता कामहरू उनको कमजोर चरित्रका परिचायक हुन्।

जङ्गबहादुर मौकाको फाइदा उठाई शक्तिशाली भए। जङ्गबहादुरले देखेका थिए आफूभन्दा अघि एक दशकमा भीमसेन थापालगायत अनेक भारादारहरू दिवंगत भएको। यस्ता धेरै हत्याकाण्डका मुख्य उत्तरदायी त राज्यलक्ष्मी नै थिइन्।

राज्यलक्ष्मीकै कारणले नेपालले १०४ वर्षको जहाँनिया शासन भोग्नुपर्‍यो। निरंकुश शासन शुरू गर्ने पहिला प्रधानमन्त्री जङ्गबहादुर थिएनन्, भीमसेन थापा थिए। पहिलो भण्डारखालपर्वमा ९३ जनाको ज्यान लिइएको थियो।

भीमसेन थापाले राजराजेश्वरी, गोरक्षराज्यलक्ष्मी जस्ता रणबहादुर र गीर्वाणका विवाहिता बडामहारानीहरूलाई

सती पठाउन बाध्य गरेका थिए। यसका अतिरिक्त अन्य कैयौं केटीहरूलाई पनि सती पठाइएको थियो। अंग्रेजसँग लडाई गरी भीमसेनले नेपालको तत्कालको सम्पूर्ण क्षेत्रफलको तीनखण्डको एक खण्ड गुमाएका थिए भने जङ्गबहादुरले गुमेको क्षेत्रमध्ये नयाँ मुलुक (बाँके, बर्दिया, कैलाली र कञ्चनपुर) नेपालमा फिर्ता ल्याएका थिए।

जहाँनियाँ शासन शुरू गरे तापनि जङ्गबहादुरले अंग्रेजबाट नेपालको स्वतन्त्रता बचाए। आफ्ना छोरालाई राजगद्दीमा राख्ने उद्देश्यमा राज्यलक्ष्मी असफल भइन्। उनी सफल भएकी भए नेपालमा जङ्गबहादुरले शासन गर्न पाउने थिएनन्। त्यसो हुँदा नेपालमा राणा शासनकालभन्दा कम शोषण हुन्थ्यो होला ? के बढी प्रगति हुन्थ्यो होला ? भीमसेन थापाले नेपालको सीमा नजिक गोरखपुरबाट डोला लिन पठाएर साम्राज्यलक्ष्मी र राज्यलक्ष्मी नेपाल आएका थिए। अन्ततोगत्वा भीमसेन थापाले सेरिएर आत्महत्या गर्नमा एउटा कारक साम्राज्यलक्ष्मी बनिन्।

नेपालबाट १०४ वर्षको राणाशासन आउनमा मुख्य कारण राज्यलक्ष्मी बनिन्। यसरी यी दुई रानीहरूलाई नेपाल ल्याएर भीमसेनले थाहा नपाई नपाई आफ्नो मृत्युको बाटो खोले र अर्कोतिर आफूले तीस वर्ष निरंकुश शासन गरेको जस्तै एकसय चार वर्षको अर्को निरंकुश शासनको ढोका खोले। इतिहास कति निर्दयी छ।

कोतपर्व भएको रात आफ्ना सौताका छोरा १७ वर्षका सुरेन्द्र र १५ वर्षका उपेन्द्रलाई मारिएका भारदारहरूको लाशको दृश्य देखाउने हुकुम दिएको हुनाले राज्यलक्ष्मीको निष्ठुरी र परपीडक व्यक्तित्व देखिन्छ।[४] कोतपर्व हुँदा रानी राज्यलक्ष्मीले वीरकेसर पाँडेलाई काट्नु भनी हुकुम दिँदा लालमोहर नभई त्यसो गर्न पाइँदैन भनी राजेन्द्रले भनेका थिए।[५]

कोतपर्वपछि तीर्थयात्रा गर्न जान्छु भनी राजा राजेन्द्र पाटनतर्फ गए। राज्यलक्ष्मीले राजेन्द्रको पछाडि "गुप्तचर" छाडेकी थिईन्। त्यस गुप्तचरले राजा राजेन्द्रले सरदार भवानीसिंह भन्ने व्यक्तिसँग त्यस दिन एकान्तमा धेरै कुराकानी गरेको कुरा सुनी राज्यलक्ष्मीले तुरुन्त मार्न लगाएको कुरा लेखिएको छ।[६] यस उदाहरणबाट पनि राज्यलक्ष्मीको चरित्र झल्किन्छ।

राज्यलक्ष्मीका कान्छा छोरा वीरेन्द्र विक्रमपट्टिका नाति मोहनविक्रम शाह (प्रथम) मोतीराम भट्टका समकालिक थिए। मोतीरामले वि.सं. १९४८ मा पुस्तक प्रकाशित गर्दा मोहनविक्रम शाह (प्रथम) बाट आर्थिक सहायता पाएको हुनसक्दछ। राज्यलक्ष्मी वाराणसी जाँदा आफूसँगै गएका पुरेतका पनाति कृष्णप्रसाद भट्टराई वि.सं. २०४६ को जनआन्दोलनपछि सुरेन्द्रका पनातिका नाति श्री ५ वीरेन्द्रको पालामा प्रधानमन्त्री हुन पुगेको कुरा पनि बडो चाखलाग्दो छ।

गोरखपुरमा हिन्दीको भाषिका अवधी बोलिन्छ भने वाराणसीको भाषिका हो भोजपुरी। यसैगरी रामनगरमा पनि भोजपुरी बोलिन्छ। अवधी मातृभाषा भएकी राज्यलक्ष्मी ६ वर्षको उमेरमा काठमाडौं आउँदा नेपाली छिट्टै सिकिन् होला किन कि

नेपाली, हिन्दी, भोजपुरी र अवधी ज्यादै नजिकका भाषा हुन् । काठमाडौं शहरमा बस्दा सायद नेवारी भाषा पनि सिकिन् होला ।

नेपालबाट निर्वासित भएर वाराणसी गएपछि राज्यलक्ष्मी र उनका परिवारलाई मुद्दामामिलाको समस्याले निकै सताएको देखिन्छ । सम्पत्तिको कुरामा साहिँला साहेबज्यू रणेन्द्रले यिनैमाथि मुद्दा गरे । यिनका नाति मोहनविक्रम शाह र नातिनी बुहारी छेत्रकुमारीले तथा उनका धर्मपुत्रले समेत रामनगरको उत्तराधिकारी को हो भन्ने विषयमा भारतको अदालत मात्र नभई इङ्गल्यान्डको प्रिभि काउन्सिलसमेत जानुपऱ्यो ।

राज्यलक्ष्मीकै सम्पत्तिमा पनि उनको स्वर्गवास भएपछि रणेन्द्रका छोरा योगप्रताप र वीरेन्द्रका छोरा मोहनविक्रमले अदालत जानुपऱ्यो । यस्ता मुद्दामामिलामा कति पैसा खर्च भयो होला ? आफ्नो छोरालाई राजसिंहासनमा राख्न कोतपर्व, भण्डारखालपर्व जस्ता घटना नघटाएर शान्तिपूर्वक नेपालमै बसिराखेको भए राज्यलक्ष्मीको कति सम्मान हुन्थ्यो होला र मुद्दामामिलामा अनावश्यक पैसा खर्च हुँदैनथ्यो होला ।

अंग्रेजसँग लडाई हारी सुगौलीको सन्धिमा हस्ताक्षर गर्न बाध्य हुनुपरेको गरीब देश नेपालमा एक नारीको कारण कति अस्थिरता आयो, कति मानिस मारिए र १०४ वर्षको राणाशासनमा रहनुपऱ्यो र उनी आफैंले भारतमा रही मुद्दा मामिला पनि गर्नुपरेको कुरा राज्यलक्ष्मीको जीवनले देखाउँछ । ■

**सन्दर्भ ग्रन्थ**


(१) *पुरुषोत्तम शम्शेर जबरा, श्री ३ हरूको तथ्य वृत्तान्त, पृ. ३२, ३३*

(२) *पूर्ववत्*

(३) *ज्ञानमणि नेपाल, नेपालको महाभारत, पृ. २१२*

(४) *पुरुषोत्तम शम्शेर राणा, श्री ३ हरूको तथ्य वृत्तान्त, पृ. ३६*

(५) *ज्ञानमणि नेपाल, नेपालको महाभारत, पृ. २७२*

(६) *बाबुराम आचार्य, पूर्ववत्*




बुढेसकालमा कान्छी महारानी राज्यलक्ष्मी

परिशिष्ट - १

# घटनाक्रम

| | |
|---|---|
| वि.सं. १८७० मार्ग २४ गते | श्री ५ राजेन्द्रको जन्म |
| वि.सं. १८७२ कार्तिक २५ गते | साम्राज्यलक्ष्मीको गोरखपुरमा जन्म |
| वि.सं. १८७३ मार्गशुदि १ | श्री ५ गीर्वाणको विफरको रोगवाट स्वर्गवास, जेठी रानी सती जान्छिन् |
| वि.सं. १८७३ मार्ग | श्री ५ गीर्वाणकी कान्छी रानी (गोरक्षराज्यलक्ष्मी) को विफरको रोगवाट स्वर्गवास |
| वि.सं. १८७४ भाद्र २२ गते | राज्यलक्ष्मीको गोरखपुरमा जन्म |
| वि.सं. १८८० माघ २५ गते | श्री ५ राजेन्द्रको व्रतवन्ध र वालाजुमा विवाह (साम्राज्यलक्ष्मी र राज्यलक्ष्मीको साथ) |
| वि.सं. १८८६ असोज २० गते | श्री ५ सुरेन्द्रको जन्म |
| वि.सं. १८८८ माघ ६ गते | माहिला साहेबज्यू उपेन्द्रविक्रमको जन्म |
| वि.सं. १८८८ चैत | महारानी ललितत्रिपुरासुन्दरीको स्वर्गवास |
| वि.सं. १८९४ असार | भीमसेन थापावाट सवै अधिकार खोसिन्छ। |
| वि.सं. १८९४ श्रावण | राजेन्द्र र साम्राज्यलक्ष्मीका कान्छा छोरा देवेन्द्रको स्वर्गवास (६ महिनाको उमेर) |
| | भीमसेन थापालाई विष प्रयोग गरी देवेन्द्रलाई मारेको भन्ने अभियोग लाग्छ। |
| वि.सं. १८९४ असोज | रङ्गनाथ पौडेल मुख्तियार हुन्छन्। |
| वि.सं. १८९६ वैशाख | भीमसेन थापालाई कारागारमा राखिन्छ। |
| वि.सं. १८९६ श्रावण ८ गते | भीमसेनथापाले आत्महत्या गर्दछन्, उनको शवको दाहसंस्कार गर्ने अनुमति दिइन्न। |

| | |
|---|---|
| वि.सं. १८९७ फागुन | रणजङ्ग पाँडे मुख्तियार (प्रधानमन्त्री) बन्छन् । |
| वि.सं. १८९८ वैशाख | चौतरिया फत्यजङ्गलाई मुख्तियार बनाईन्छ । |
| वि.सं. १८९८ असोज २२ गते | जेठी महारानी साम्राज्यलक्ष्मीको २६ वर्षको उमेरमा हेटौँडामा स्वर्गवास |
| वि.सं. १८९९ | सुरेन्द्रले "नानी महाराजाधिराज" भन्ने पदवी पाउँछन् । |
| वि.सं. १८९९ पौष १३ गते | माथवरसिंह थापा मुख्तियार बन्दछन् |
| वि.सं. १९०० श्रावण | रणजङ्ग पाँडेलाई विष खुवाईन्छ |
| वि.सं. १९०२ जेठ १ गते | माथवरसिंहको हत्या |
| वि.सं. १९०२ जेठ | राज्यलक्ष्मीलाई राजपरिवारका सदस्यबाहेक अरूलाई सजाय गर्ने, देश निष्कासन गर्ने, पजनी गर्ने अधिकार दिइन्छ |
| वि.सं. १९०२ असोज १० गते | फत्यजङ्ग शाह मुख्तियार बनाईन्छन् |
| वि.सं. १९०३ भदौ ३१ गते | गगनसिंहको हत्या |
| वि.सं. १९०३ भदौ ३१ गते | कोतपर्व, मुख्तियार फत्यजङ्गसमेत ३१ जना भारदारको हत्या, जङ्गबहादुर प्रधानसेनापति बन्छन् |
| वि.सं. १९०३ कार्तिक १७ गते | भण्डारखालपर्व, १७ जनाको हत्या |
| वि.सं. १९०३ मार्ग ४ गते | राज्यलक्ष्मीलाई काशीमा निर्वासित गरिन्छ, उनको साथ राजेन्द्र पनि जान्छन् |
| वि.सं. १९०३ पुस | राजेन्द्र, राज्यलक्ष्मी, रणेन्द्र र वीरेन्द्र काशी आइपुग्छन् । |
| वि.सं. १९०३ माघ - १९०४ वैशाख | राजेन्द्रले काशीबाट भारत-नेपाल सीमामा जान लाग्दा आफ्नो तेस्रो विवाह गर्ने कुराबारे विजयराजलाई पत्र लेख्छन् |
| वि.सं. १९०४ जेष्ठवदि ५ | राज्यलक्ष्मीले राजेन्द्रलाई कोतपर्वबारे पत्र लेख्छिन् |
| वि.सं. १९०४ जेष्ठशुदि १३ | श्री ५ सुरेन्द्रको राज्यारोहण |
| वि.सं. १९०४ साउन १४ गते | अलौपर्व, काठमाडौंबाट नेपाल-भारत सीमाको अलौमा सनकसिंह टण्डनको नेतृत्वमा गएको सेनाले राजेन्द्रलाई हराउँछ । राजेन्द्रलाई काठमाडौं ल्याई भक्तपुरदरबारमा नजरबन्द गरिन्छ । |

| | |
|---|---|
| वि.सं. १९०७ पुस | बेलायतयात्राबाट नेपाल फर्कन लाग्दा जङ्गबहादुरले वाराणसीमा साहेबज्यू रणेन्द्र र साहेबज्यू वीरेन्द्रलाई भेट्छन् । |
| वि.सं. १९१३ साउन १४ गते | जङ्गबहादुरले श्री ३ महाराजको पदवी पाउँछन् |
| वि.सं. १९३३ फागुन १८ गते | जङ्गबहादुरको रौतहट जिल्लाको पत्थरघट्टामा शिकार गर्न जाँदा देहान्त |
| वि.सं. १९३८ जेष्ठ ६ गते | श्री ५ सुरेन्द्रको स्वर्गवास |
| वि.सं. १९३८ असार ३० गते | श्री ५ राजेन्द्रको स्वर्गवास |
| वि.सं. १९३८ मार्ग | श्री ५ पृथ्वीवीरविक्रमको राज्यारोहण |
| वि.सं. १९४५ | राज्यलक्ष्मीका नाति मोहनविक्रम शाह (प्रथम) रामनगरका राजा बन्दछन् |
| वि.सं. १९५६ | राज्यलक्ष्मीको वाराणसीमा स्वर्गवास |
| वि.सं. १९६८ | श्री ५ पृथ्वीवीरको स्वर्गवास, रामनगरमा मोहनविक्रम शाह (प्रथम) को स्वर्गवास |

## परिशिष्ट – २

# शाहवंशको बंशवृक्ष



# परिशिष्ट – ३

# तनहुँ सेनवंशको वंशावली

**मणिमुकुन्द सेन**



**भृङ्गि सेन**



**हम्वीर सेन**



**तुला सेन**



**प्रताप सेन**



**दामोदर सेन**



**दिग्विजय सेन**



**कामराजदत्त सेन**



**त्रिविक्रम सेन**



**कामरीदत्त सेन**



**हरकुमारदत्त सेन** *(तनहुँका अन्तिम राजा रामनगर आएका)*



**तेजप्रताप सेन**



**अमरप्रताप सेन**



**प्रल्हाद सेन**



**बोधकुमारी** *(राजलक्ष्मी पुत्र वीरेन्द्र विक्रम शाहसँग विवाह भएको)*



**मोहनविक्रम शाह** (रामराजा प्रथम)

**टिप्पणी**

१. *दामोदर सेनकी छोरी मलिकावतीका छोरा गोरखाको राजा नरभूपाल शाह थिए ।*

२. *भण्डारखाल पर्वमा महत्वपूर्ण भूमिका खेल्ने विजयराज पाण्डेका वाजे नारायण तनहुँमा बस्दथे र त्रिविक्रमसेनसँग आफ्नो भेट गराईदिनु पऱ्यो भनी पृथ्वीनारायण शाहले पत्र लेखेका थिए ।*

३. *मोहनविक्रम शाहले आफ्नो छोरा नभएकोले आफ्नो नजिकको दाजुभाईबाट धर्मपुत्र राख्नुपर्ने हुनाले श्री ५ सुरेन्द्रका भाई उपेन्द्रका पनाति (धीरेन्द्रविक्रम शाह र बागकी कान्छीमैयाका नाति) मोहनविक्रम शाहलाई धर्मपुत्र राखे ।*

## परिशिष्ट – ४

# रामनगर, सुगौली, बेतिया र नेपाल-भारत सीमावर्ती क्षेत्र देखाउने मानचित्र



## परिशिष्ट – ५

# राज्यलक्ष्मी र साम्राज्यलक्ष्मीको नाम भएको मुद्रा



यी सुकीहरू वडागुरुज्यू श्री केसरिराज पाण्डेको संग्रहमा रहेका छन्। यसमा दिइएका मितिहरू शाकेमा हुनाले विक्रम सम्वत् १८८८ र १८९९ का छन्।

परिशिष्ट - ६

# मोतीरामले 'प्रह्लाद भक्तिकथा' मा वि.सं. १९४८ मा मोहनविक्रम शाह (प्रथम) बारे लेखेको भूमिका

**"प्रह्लादभक्तिकथा" को भूमिका**

**समर्पण**

स्वस्ति श्रीगिरिराजचक्रचूडामणिवंशावतंसचम्पारनरामनगराधीशश्रीश्रीश्रीश्रीश्रीमान् महाराजमोहनविक्रमशाहदेवसमरविजयीचरणकमलेषु-

स्वस्ति श्रीगिरिराज राजकुलका दीपक भईबक्सियो ।
दीपक्‌रूप प्रकाशमान रहँदा झल्झल् जगत् भै गयो ॥
दीनानाथ दयालुता हजुरको वर्णन् कसोरी गरु ।
"मोहन्‌विक्रम शाहदेव" नृपती जस्ता त को छन् अरु ॥१॥

"प्रह्लाद्‌भक्तिकथा" बनाई मइले अर्पण् हजुर्‌मा गऱ्याँ ।
ताहाँबाट प्रसन्न भैकन लिया आनन्दमा मो पऱ्याँ ॥
यस् भिक्षुक्‌सित यै रहेछ कहँदै लीबक्सियेला जसै ।
यो मेरी अबला विचारि कविता खुप् दंग पर्ली तसै ॥२॥

झींझो बिन्ति कति गरू हजुरमा क्यै ऊँचनीच् देखियोस् ।
अल्पज्ञान मलाई जानि प्रभुले माफी फकत् बक्सियोस् ॥
वुद्धीमान प्रतापवान् हजुरमा कुन् कुन् म बिन्ति कहूँ ।
"मोतीराम" सदा हितेच्छु प्रभुको थर् भट्ट भन्या म हूँ ॥३॥

सर्कार्‌को सदा शुभचिन्तक
मोतीराम भट्ट

संवत् १९४८ विक्रमी
**वसन्त पञ्चमी, रविवार** **काष्ठमण्डप नगर, नेपाल ।**

**सन्दर्भ ग्रन्थ**


*(१) मोती ग्रन्थावली, सम्पादक : रमा शर्मा, प्रकाशक : राष्ट्रिय युवा सेवा कोष*

# सन्दर्भ ग्रन्थ


| | | |
|---|---|---|
| १. | *Rana, Purushottam* | **Jung Bahadur Rana,** Book Faith India, 1997 |
| २. | *प्रकाश ए. राज* | **विजयराज पण्डित** |
| ३. | *ज्ञानमणि नेपाल* | **नेपालको महाभारत,** साझा प्रकाशन, २०५० |
| ४. | *प्रकाश ए. राज* | **वाराणसीसँग नेपालको सम्बन्ध,** Contribution to Nepalese Studies, CNAS, January 2000 |
| ५. | *रामजी उपाध्याय* | **नेपालको इतिहास तथा दिग्दर्शन,** प्र. सुब्बा होमनाथ केदारनाथ, २००७ |
| ६. | *डिल्लीराम मिश्र* | **नेपाल अधिराज्यमा तनहुँ,** प्र.शर्मिला मिश्र, २०५७ |
| ७. | *कृष्णप्रसाद भट्टराई* | **ऋद्धिबहादुरको बारेमा, उन्नयन,** पूर्णाङ्क २५ २०५४ श्रावण-पौष |
| ८. | *Riccardi Theodore* | **An Account of Nepal,** Shyamal Das, Kailash, Vol. III, No. 3, 1975 |
| ९. | *Manandhar, Tri Ratna* | **A New Light on the Kot Massacre,** Rolamba, April-June 1984 |
| १०. | *Mahes Raj Pant* | श्री ५ को स्वर्गवास भएको कुरा परेको तात्कालिक अप्रकाशित पत्र, **पूर्णिमा,** पूर्णाङ्क ५८ |
| ११. | *ज्ञानमणि नेपाल* | वलीअहद त्रैलोक्यवीरविक्रमका महारानीहरू र रणोद्दीप सिंहको तीर्थयात्रा, **प्राचीन नेपाल,** संख्या ७८, कार्तिक-मंसीर २०४० |
| १२. | *ज्ञानमणि नेपाल* | जङ्गबहादुरका मान अपमानका कुरा, **प्राचीन नेपाल,** कार्तिक मंसीर २०४२ |

| | | |
|---|---|---|
| १३. | *दिनेशराज पन्त* | राजज्योतिषी लीलानाथ पाँडे, **पूर्णिमा**, पूर्णाङ्क १४, पृ १६२ |
| १४. | *राजेश गौतम* | **कर्मयोगी राजनीतिज्ञ कृष्णप्रसाद भट्टराई**, वि.पी. प्रकाशन, २०५७ |
| १५. | स्वर्गीय रामजी तिवारीको संग्रहमा रहेका अप्रकाशितपत्र, **पूर्णिमा**, पूर्णाङ्क ७०, २०४३ आश्विन | |
| १६. | *सुन्दरानन्द बाँडा* | **त्रिरत्न सौन्दर्य गाथा** |
| १७. | *Ludwig F. Stiller* | Letter from Kathmandu – **The Kot Massacre** Research Centre for Nepal and Asian Studies, T.U. 1981 |
| १८. | *अम्बिकाप्रसाद उपाध्याय* | नेपालको इतिहास र रामनगरको इतिहास |
| १९. | *Padma Jung Bahadur Rana* | **Life of Jung Bahadur Rana,** Ratna Pustak Bhandar, 1980 |
| २०. | *दिनेशराज पन्त* | बडागुरुज्यू विजयराजको जन्ममिति र मृत्यु मितिको विषयमा, **ऋतंभरा**, २०५८ विजयादशमी |
| २१. | *Oldfield, Ambrose* | **Sketches from Nepal,** Cosmo Publications, 1981 |
| २२. | शेखरसिंह गौतम | **हिमवर्ष और नेपाल**, मानव जीवन संस्थान गोरखपुर एवं वहराइच |
| २३. | कृष्णप्रसाद भट्टराई | "दुई पुस्ता काशी मै", **कान्तिपुर**, २०६०/४/१७ |
| २४. | दिनेशराज पन्त | श्री ५ राजेन्द्रकी कान्छी रानीसम्बन्धी अप्रकाशित ६ वटा पत्र, **पूर्णिमा**, पूर्णाङ्क ७०, २०४३ असोज |
| २५. | *Landon, Perceval* | **Nepal,** London 1928 |

# लेखकका अन्य पुस्तक

१. कोतपर्वकी महारानी राज्यलक्ष्मी (जीवनी)

२. विद्वच्छिरोमणि हेमराज शर्मा (जीवनी)

३. विजयराज पण्डित (जीवनी)

४. रोदीघरको सम्झना (उपन्यास)

५. काठमाडौं जाने बाटो (उपन्यास)

६. सुतेको ज्वालामुखी (कथा संग्रह)

७. पन्नाको औंठी (उपन्यास)

८. केही खोजेको केही देखेको (लेख संग्रह)

९. बहुजातीय बहुभाषीय नेपाल (लेख संग्रह)

१०. एक यात्रा लेखकको कथा

# BOOKS BY THE SAME AUTHOR

(English)

1. Kathmandu and the Kingdom of Nepal (*Lonely Planet, Australia*)
2. Road to the Chinese Border ( *Foreign Affairs Journal, Nepal*)
3. India- A Travel Survival Kit (co-author, *Lonely Planet*)
4. Kay Gardeko- The Royal Massacre in Nepal (*Rupa, India*)
5. Ten Walks in Kathmandu (*Harper Collins India*)
6. Nepal Phrasebook (*Lonely Planet, Australia*)
7. Nepali-English/English-Nepali Dictionary (*Hippocrene, USA*)
8. Nepali- Dictionary/Phrasebook (*Hippocrene, USA*)
9. A Nepalese discovers his country (*Sajha, Nepal*)
10. Pokhara- a valley in the Himalayas (*Nabeen, Nepal*)
11. Around the Annapurnas (*Nabeen, Nepal*)
12. Royal Chitwan National Park (*Nabeen, Nepal*)
13. Some Tibetan Buddhist Monasteries in Nepal (*Nabeen*)
14. Road to Kathmandu (*Nabeen*)
15. The New York Connection (*Nabeen*)
16. Queens of the Shah Dynasty in Nepal (*Nabeen*)
17. Brahmins in Nepal (*Nabeen*)
18. Portraits and Photographs from Nepal (*Nabeen*)
19. Inside Nepal (*Nabeen)*
20. A Nepalese student views the US (*self*)
21. Glimpses from my sketchbook in Nepal (*self*)
22. Development in Nepal (*self*)
23. Maoists in the Land of Buddha (*Nirala, New Delhi, INDIA*)



प्रकाश ए. राज



हनुमानढोका दरवार



वाराणसी

*नेपालको इतिहासमा १९०३ सालको कोतपर्व यस्तो घटना हो जसबाट इतिहास नै बदलियो । यस [illegible] देशमा १०४ वर्ष लामो राणा शासन शुरू भयो । कोतपर्वकी मुख्य नायिका श्री ५ राजेन्द्रकी कान्छी महारानी [illegible]लक्ष्मी थिइन् । उनको जन्म कहाँ भएको थियो, कोतपर्व र भण्डारखाल पर्वपछि निर्वासित भई वाराणसीमा [illegible]सेकी थिइन् भन्नेबारे यस रचनामा ऐतिहासिक विवरण लेखिएको छ । श्री ५ राजेन्द्रका जेठा छोरा सुरेन्द्रको [illegible] आफ्ना छोरा रणेन्द्रलाई राजा बनाउने राज्यलक्ष्मीको आकांक्षा त पूरा हुन सकेन तर उनकै जीवनकालमा उनका [illegible] भने भारतको रामनगर राज्यको राजा हुन पाए । त्यसपछि उनको वंश नै मासियो ।*

कोतपर्वकी चर्चित नायिका महारानी राज्यलक्ष्मीलाई विभिन्न कोणबाट पाठकहरू माझ परिचित गराउन [illegible]कले गहन तथा ईमान्दार प्रयास गरेका छन् ।

**– गोरखापत्र**, २०५९/[illegible]/२०

---

लेखकले अंगालेको कथात्मक शैलीले पाठकलाई मुग्ध पार्दछ ।

**– हिमाल**, २०५९/[illegible]१/१

---

पुस्तकको आकार सानो भए ता पनि महारानी राज्यलक्ष्मीको नाम, यसको प्रमाणिकतामा जोड, राजा राजेन्द्रविक्रमसंग विवाहदेखि वाराणसीमा दुखद जीवन बिताउनु परेको र त्यसैमा दुखद अवसान भएको कुरालाई प्रामाणिक रुपमा पेश गरिएको छ ।

**– देशान्तर**, २०५९/६/१९

---

पुस्तक निकै उपयोगी र संग्रहणीय छ ।

**– खवरकागज**, २०५९/[illegible]/५

---

श्री प्रकाश ए. राज नेपालके प्रसिद्ध लेखक है । उनकी भारत और नेपाल पर लिखी पुस्तकें विश्वप्रसिद्ध हुई है ।

**पांचजन्य, दिल्ली**, १२/२/१९९५

---

नेपालको इतिहास गहनरुपले अध्ययन, अनुसन्धान गर्न सफल भएका । इतिहासका सामग्रीलाई अगाडि राखेर तिनमा भएको अस्पष्टतालाई स्पष्ट पार्दै प्रकाश ए. राजले प्रस्तुत कृतिलाई सहज, सरल र बुझिने गराएका छन् । प्रकाश ए. राजले प्रकाश पार्न नसकेका विषयलाई दिनेशराज पन्तको मन्तव्यले स्पष्ट पारेको हुनाले कृतिको गुण अझ बढेको प्रतीत हुन्छ । ऐतिहासिक सामग्रीलाई अझ रोचक र पत्यारिलो बनाउन परिशिष्ट अंतर्गत घटनाक्रम, शाहवंशको वंशवृक्ष, तनहुँ सेनवंशको वंशावली, मानचित्र, राज्यलक्ष्मी र साम्राज्यलक्ष्मीको नाम अंकित भएका मुद्राचित्र समावेश गरिनुले कृतिको गरिमा अझ बढेर गएको छ । त यिनै सामाग्रीहरूले गर्दा प्रकाश ए. राजको **कोतपर्वकी महारानी राज्यलक्ष्मी** थप पठनीय र संग्रहणीय वनेको छ ।

**डा. कृष्णप्रसाद दाहाल**
**गरिमा, भदौ २०६०**

